● वर्ष १० ● अङ्क ३ ● कार्तिक २०६५ ● पूर्णाङ्क १११

पत्रिका व्यवस्थापन समितिद्वारा सम्पादित एवं

***सिद्धाश्रम शक्ति केन्द्रद्वारा* प्रकाशित**

लक्ष्मी विशेष

मूल्य रु. ३०/-, वार्षिक रु. ३५०/-



● **चितवन**, भ.न.पा- २, क्षेत्रपुर
फोन: ०५६-५२१३८५
● **गोरखा**, सौरपानी–४,
फोन: ०६४-४२९३१८
● **कास्की**, पो.उ.म.न.पा.-
१०, रामघाट,
फोन: ०६१-५३०७८६
● **सर्लाही**, बरहथवा-७, एस्माली टोल,
फोन: ०४६-५४०३३१
● **पाल्पा**, तानसेन,
फोन: ९८४७०-२८१८८
● **ललितपुर**, लगनखेल,
फोन:२२२००२१
● **गोरखा**, बसपार्क,
फोन: ०६४-४२०३४८
● **तनहुँ**, दमौली, व्यास गुफा,
फोन: ०६५-५६१६६२
● **लमजुङ**, बेंसीशहर-९, शेराबजार
● **भक्तपुर**, कटुन्जे-१,
फोन: ०१-६२१३४५५
● **काभ्रे**, बनेपा, नाला जाने बाटो
फोन: ०१-६२२५१७२
● **कास्की**, लेखनाथ चोक,
फोन: ०६१-५६०१६९
● **सिन्धुली**, रातमाटा
● **स्याङ्जा**, प्रगतिनगर घुम्ती
फोन: ९८४६०-४४३५४
● **चितवन**, गौरीगञ्ज
● **सिन्धुपाल्चोक**, बाह्रबिसे
फोन: ०१-६९१६५९३
● **कास्की**, अर्चलबोट, विन्ध्यवासिनी

# जानकारी

सिद्धाश्रम शक्ति केन्द्र प्रचलित नेपाल कानूनअनुसार विधिवत् रूपमा दर्ता भएको एक अनुसन्धानमूलक आध्यात्मिक संस्था हो र यसको केन्द्रीय कार्यालय हाल बसुन्धरा, कल्की मन्दिरसँगै काठमाडौँमा रहेको छ । परमपूज्य सद्गुरुदेवद्वय परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज एवं नेपालीहरूका गर्वका प्रतिमूर्ति महायोगी श्री शिव गोरक्षको अनुकम्पा, कृपा एवं आशीर्वादको फलस्वरूप यस केन्द्रको जन्म भएको हो । आफ्नो छुट्टै पहिचान, स्वतन्त्र अस्तित्व एवं आफ्नै किसिमको स्वाभिमान बोकेको यो संस्था देश विदेशमा रहेका अन्य कुनै संघ, संस्था वा आश्रमको शाखा, उपशाखा वा सम्पर्क कार्यालय नभएको व्यहोरा सम्बन्धित सबैका लागि जानकारी गराइएको छ । यो केन्द्र महान् गुरुहरूको स्पष्ट सूक्ष्म मार्गनिर्देशनमा आध्यात्मिक युग पुनर्निर्माणको लक्ष्यमा गतिशील छ । यहाँ संचालन भइरहेका सम्पूर्ण कार्यक्रम तथा गतिविधिहरू यसै केन्द्रमार्फत सोझै निर्देशित छन् । यहाँबाट उपलब्ध हुने सम्पूर्ण सामग्रीहरूको प्राण-प्रतिष्ठा विशेषरूपमा यही आश्रमबाट गरिएको हुन्छ । त्यसैले एक स्वतन्त्र र आफैमा सक्षम यस संस्थालाई अन्य कुनै संघ, संस्था वा आश्रमसँग तुलना गर्न खोज्नु, त्यस्तै प्रकारका कुराहरू यहाँबाट लागू गराउन, प्राप्त गर्न खोज्नु यस संस्थाको अवहेलना गरे सरह हुनेछ जे जति कार्यक्रमहरू यहाँ संचालन भइरहेका छन् र आगामी दिनहरूमा पनि संचालन हुँदै जानेछन्, ती सबै परमपूज्य सद्गुरुदेवहरूकै इच्छा एवं निर्देशनअनुसार सम्पन्न हुनेछन् । त्यसैले अनावश्यक तर्क-वितर्क, शङ्का-उपशङ्का गरी, भ्रम फैलाउँदै यस संस्थाको छविमाथि अनावश्यक टीका-टिप्पणी गर्नु सत्यता र वास्तविकतामाथि नै प्रश्नचिह्न लगाउनु हो । प्रत्येक व्यक्तिका लागि आवश्यक पर्ने सम्पूर्ण प्रकारका मार्गनिर्देशन प्रदान गरी भौतिक समस्याहरूको समाधान गर्दै आध्यात्मिक उच्चता प्रदान गर्न, पूर्णतामा लैजान यो केन्द्र सक्षम छ । विश्वास अविश्वासभन्दा माथि, साधारण व्यक्तिको सीमित सोचाइ, विचार र कल्पनाभन्दा परको यस अद्वितीय आश्रममा आबद्ध भई आफ्नो जीवनलाई उत्कर्षमा पुऱ्याउन सक्नु नै हाम्रो अहोभाग्य हुनेछ । यस्ता प्रकारका अनावश्यक भ्रमबाट सतर्क हुँदै पूर्णरूपमा स्पष्ट भएर मात्र अघि बढ्न हुन सम्पूर्ण महानुभावहरूमा सिद्धाश्रम शक्ति केन्द्र हार्दिक अनुरोध गर्दछ । साथै केन्द्रको आफ्नै प्रकारको नीति, नियम र अनुशासन भएकोले यसलाई पालना गर्न नसक्ने व्यक्तिहरूका लागि यस केन्द्रमा कुनै स्थान रहने छैन र यससम्बन्धी कुनै किसिमको सुनुवाइ पनि नहुने व्यहोरा अवगत गराइएको छ । साथै, आध्यात्मिक शक्ति अनुसन्धानमूलक यस मासिक पत्रिकामा प्रकाशित लेख, रचना, चित्रादिमा संस्थाको सहमति हुन आवश्यक नरहेको व्यहोरा अवगत गराइन्छ ।

## परामर्श सेवासम्बन्धी सूचना

सिद्धाश्रम शक्ति केन्द्रमा परामर्श सेवासम्बन्धी प्राप्त सुविधा निम्नानुसार रहेको जानकारी गराइन्छ ।

| स्थान | समय | बार |
|---|---|---|
| केन्द्रीय कार्यालय | साँझ ४:३० बजेपछि | सोमबार र मङ्गलबार |
| ललितपुर सम्पर्क कार्यालय | दिउँसो ४:०० बजेपछि | मंगलबार र बिहीबार |
| भक्तपुर सम्पर्क कार्यालय | दिउँसो ४:०० बजेपछि | शनिबार र सोमबार |
| बनेपा सम्पर्क कार्यालय | दिउँसो ४:०० बजेपछि | प्रत्येक आइतबार |

# आश्रमका नियमित कार्यक्रमहरू

- आश्रम खुल्ने समय : प्रत्येक दिन बिहान १०:०० बजेदेखि साँझ ६:०० बजेसम्म ।
- गोरक्ष निखिल पुस्तकालय खुल्ने समय : प्रत्येक दिन १०:०० बजेदेखि साँझ ५:०० बजेसम्म ।
- परामर्श सेवासम्बन्धी भेटघाट : अपराह्न ३:०० बजेपछि ।
- आरती : प्रत्येक साँझ ५:०० बजे ।
- गुरु पूजन : प्रत्येक बृहस्पतिबार बिहान १०:०० बजेदेखि ।
- विशेष गुरु पूजन : प्रत्येक अंग्रेजी महिनाको २१ तारीख, बिहान १०:०० बजेदेखि ।
- आध्यात्मिक शक्ति अनुसन्धानमूलक नेपालको एक मात्र मासिक पत्रिका 'गोरक्ष निखिल वाणी'को नियमित प्रकाशन ।
- विशेष साधना : विभिन्न जिल्लाहरूमा विशेष साधना कार्यक्रम ।
- विभिन्न चाड-पर्व एवं अवसरहरूमा विशेष कार्यक्रम ।
- विशेष हवन: प्रत्येक महिनाको पहिलो सोमवार श्री शिव गोरक्ष हवन, पहिलो मङ्गलवार तान्त्रोक्त वटुक भैरव हवन, पहिलो बुधवार तान्त्रोक्त महालक्ष्मी हवन र पहिलो बिहीवार तान्त्रोक्त बगलामुखी हवन कार्यक्रम संचालन ।


**आवरण तथा भित्री कम्प्युटर सेटिङ्ग**
सिद्धाश्रम शक्ति केन्द्र, कम्प्युटर उपविभाग

**मुद्रण**
**भेराइटी प्रिन्टर्स प्रा.लि.**
कुलेश्वर, काठमाडौँ ।

**पत्रिकाको कार्यालय**
**बसुन्धरा, कल्की मन्दिर, काठमाडौँ, नेपाल**
**फोन नं: २०७१२००,२१००१५३, पत्रिका वितरण फोन नं: ०१-६२२५१७७** (CDMA Phone), URL: gnv.org.np, Email: info@gnv.org.np

सम्पूर्ण हिन्दुहरूको दोस्रो ठूलो पर्व दीपावलीको उपलक्ष्यमा सम्पूर्ण महानुभावहरूमा सुख, समृद्धिका साथमा जीवनमा अन्धकार हटी ज्ञानरुपी उज्यालो छाओस्, माता महालक्ष्मीको कृपा, आशीर्वाद प्राप्त हुँदै जाओस् भनी परमपूज्य सद्‌गुरुदेवहरूसमक्ष प्रार्थना गर्दै हार्दिक मंगलमय शुभकामना व्यक्त गर्दछौं।

हिन्दुहरूको प्रत्येक चाडपर्वको आफ्नै ऐतिहासिक, साँस्कृतिक, धार्मिक, आध्यात्मिक महत्त्व रहँदै आएको पाइन्छ। चाडपर्वभित्र छिपेका गूढ रहस्यहरुका बारेमा आजको समाज अनभिज्ञ रहेको पाइन्छ। मानव कल्याणको लागि मनाइने चाडपर्वले सामाजिक रूपमा पनि आफ्नै महत्त्व राखेको पाइन्छ। चाडपर्वको केवल बाहिरी पक्षलाई मात्रै बुझेर पुग्दैन यसका भित्री पक्षहरुमा पनि शोध, खोज हुनु आवश्यक छ। यसको रहस्य बुझेर फाइदा लिनु आवश्यक छ। कैयौं पर्वहरू मानव कल्याणका लागि, दिव्य शक्ति प्राप्तिको लागि छन्। नबुझेर मोज मस्तीमा मात्रै सीमित राखेको पाइन्छ।

दीपावली पर्वलाई अन्धकार हटाई उज्यालो प्राप्ति हुने पर्वको सांकेतिक रुपमा घर-घरमा दीपावली गर्ने गरिन्छ। घर उज्यालो भएर मात्रै व्यक्तिको मन उज्यालो हुन सक्तैन, जीवन उज्यालो हुन सक्तैन। त्यसैले सांकेतिक रुपमा चलेको दीपावलीमा दीपावली गर्ने परम्परा पनि औपाचारिकतामा मात्रै सीमित भइराखेको त छैन ? यो पनि विचारणीय प्रश्न रहेको छ।

यसपालि हामीले यस अंकलाई 'लक्ष्मी विशेष'को रुपमा निकालेका छौं। माता महालक्ष्मी धनकी अधिष्ठात्री हुनुहुन्छ। धन भन्नाले भौतिक सम्पदा मात्र नभई आध्यात्मिक धरोहरहरु पनि पर्दछन्। सम्पति भन्नाले व्यक्तिले केवल भौतिक वस्तुलाई ठान्दछन्। पैसा, घर, जग्गा, जमीन आदि मात्रै व्यक्तिको सम्पत्ति होइन। व्यक्तिभित्र रहेको आन्तरिक गुण, आन्तरिक शक्ति वास्तवमा व्यक्तिको सम्पत्ति हो, व्यक्तिको वास्तविक धन हो। दया, धर्म, करुणा, सुख, सन्तोष, शक्ति, सामर्थ्य, आत्मिक उन्नति प्रगतिको स्तर आदि आदि सम्पत्ति बिनाको धनवान् व्यक्ति साँच्चिकै अधुरो हुन्छ, अपुरो हुन्छ, त्यति मात्रै होइन लक्ष्मीको वाहनजस्तो अन्धो हुन्छ।

त्यसैले लक्ष्मीलाई केवल बाहिरी रुपमा मात्रै सीमित राख्ने प्रथाबाट, प्रवृतिबाट माथि उठौं। यस दीपावलीको पर्व जहाँ महालक्ष्मीलाई मान्ने गरिन्छ, उहाँलाई खुशी बनाउने कोशिश गरिन्छ, यस पुनीत अवसरमा माता महालक्ष्मीको दिव्य कृपा बाहय रुपमा मात्रै नभई आन्तरिक रुपमा प्राप्त गरी जीवनलाई धन्य बनाऔं।

अन्तमा यस अंकमा भए गरेका कमी कमजोरी, न्यूनताहरुको लागि परमपूज्य सद्‌गुरुदेवहरूसमक्ष र यहाँहरूसमक्ष पनि क्षमा याचना गर्दछौं र यहाँहरूको सल्लाह सुझावको अपेक्षा राख्दछौं। अस्तु!

# भगवती लक्ष्मी

विश्वमा सायदै यस्तो व्यक्ति होला जसको अभिलाषा लक्ष्मी प्राप्त गर्ने नहोस् । लक्ष्मीवान् वा धनवान् बन्नु कुनै अपराध होइन । दरिद्रतालाई आरम्भबाट नै अभिशाप भनिएको छ । त्यसैले हामी कसैलाई आदर गर्न नामको अगाडि 'श्री' वा 'श्रीमान्' अथवा 'श्रीमती' शब्द प्रयोग गर्दछौं । श्रीको अर्थ लक्ष्मी हो । त्यसैले हामी कुनै विद्वान्, योगी, साधु, संन्यासी अथवा श्रेष्ठ पुरुषको नामको अगाडि श्री लगाएर यस भावनालाई व्यक्त गर्दछौं कि तपाईं सम्पन्न हुनुहुन्छ, लक्ष्मीवान् र समाजमा सम्माननीय हुनुहुन्छ ।

यस्तो सर्वाकर्षक श्री अर्थात् लक्ष्मी वास्तवमा को हुनुहुन्छ ? उहाँको वास्तविक स्वरूप के हो ? उहाँको उत्पत्ति कसरी भयो ? आदिजस्ता विषयवस्तु प्रत्येक लक्ष्मीभक्तको मनमा उब्जनु स्वाभाविक छ । त्यसैले यहाँ यिनै प्रसंगहरूमा केन्द्रित रहेर माता लक्ष्मीको

सांगोपांग विवेचना गर्न खोजिएको छ ।

लक्ष्मी आदिशक्तिको त्यो रूप हो जसले संसारलाई भौतिक सुख प्रदान गर्नुहुन्छ अर्थात् वैभव, विलास, सम्पन्नता, अर्थ, द्रव्य, रत्न तथा धातुहरूकी अधिष्ठात्री देवीलाई लक्ष्मी भनिन्छ । लक्ष्मीको व्यापक प्रभाव क्षेत्रलाई देखेर भनिएको पनि पाइन्छ कि लक्ष्मीका साथ लाखौं गुण रहन्छन् ।

**पौराणिक सन्दर्भ**

ब्रह्माण्डलाई नियन्त्रण गर्ने पुरुष तत्त्वको प्रतिरूप अर्थात् त्रिदेवहरूमा विष्णुलाई पालनकर्ता भनिन्छ । यिनै जगपालक विष्णुको शक्तिलाई लक्ष्मीको संज्ञा दिइएको छ । विष्णुपत्नीको रूपमा लक्ष्मी उहाँका साथ सर्वत्र पूजित हुनुहुन्छ । कुनै पनि चित्र वा मूर्तिमा हेर्‍यौं भने हामीले लक्ष्मी-विष्णु वा लक्ष्मी-नारायणको युगल छवि देख्न सक्छौं । जो देवता पालन गर्नुहुन्छ उहाँको शक्ति अवश्य नै भौतिक वस्तुहरूको समृद्धिबाट सम्पन्न हुन्छ नै । मानवजातिको पालनपोषणमा जुनसुकै अन्न, वस्त्र, धन आदि प्रयुक्त हुन्छन्, ती सबै लक्ष्मीका नै देन हुन् । लक्ष्मीको अभावमा भौतिक जगत्को पालन अकल्पित हुन जान्छ । यस प्रसंगमा यो पनि ध्यान दिन योग्य छ कि त्रिदेव अर्थात् ब्रह्मा, विष्णु, महेश्वर त्यस व्यक्ति अथवा साधकप्रति विशेष कृपालु हुनुहुन्छ जो उहाँरूलाई उहाँहरूकै शक्ति (सरस्वती, लक्ष्मी, दुर्गा) का साथ स्मरण गर्दछ । मान्यता के छ भने कुनै पनि देवताको आराधना गर्दा उहाँकी देवीको पनि कृपा आशीर्वाद पाउन सकिन्छ । त्यसैले अभिष्ट देवदेवीहरूको युगलरूपमा आराधना गर्नुपर्दछ । यसको प्रभाव अनुकूल पाइएको छ । अत: लक्ष्मी उपासकका लागि भगवती लक्ष्मीका साथ भगवान् विष्णुको स्तवन, पूजन विशेष लाभदायक मानिन्छ ।

**लक्ष्मीको उत्पत्ति**

माता लक्ष्मीको सम्बन्धमा भनिन्छ कि उहाँ महर्षि भृगुकी पुत्रीको रूपमा उत्पन्न हुनुभएको थियो जसको कारण उहाँलाई 'भार्गवी' नामबाट पनि सम्बोधन गरिन्छ । दैत्य-देव संग्रामको समयमा भएको समुद्र मन्थनबाट उहाँ क्षीरसागरबाट उत्पन्न हुनुभयो । त्यसैले उहाँलाई 'क्षीरोद्तनया' नामबाट पनि विभूषित गरिएको छ । माता लक्ष्मी पद्‌मिनी देवीकी अधिष्ठात्री देवी हुनुहुन्छ । दश महाविद्यामा दसौं महाविद्या 'कमला' उहाँको नै स्वरूप हो । जब-जब भगवान् विष्णु लोककल्याणहेतु धरतीमा अवतरित हुनुहुन्छ, माता लक्ष्मी पनि उहाँसँगै अवतीर्ण हुनुभएर उहाँको प्रत्येक लीलामा साथ दिनुहुन्छ ।

महर्षि भृगुकी पत्नी ख्यातीले एउटी भुवनमोहिनी कन्यालाई जन्म दिनुभयो । समस्त शुभ लक्षणले युक्त भएकीले भृगु दम्पत्तिले उहाँको नाम 'लक्ष्मी' राख्नुभयो । बिस्तारै-बिस्तारै किशोरावस्था आएपछि उहाँ भगवान् नारायणको गुणबाट प्रभावित भएर उहाँप्रति अनुरक्त हुनुभयो र विष्णुलाई पतिरूपमा प्राप्त गर्ने इच्छाबाट समुद्रतटमा गएर घोर तपस्या गर्न लाग्नुभयो । कठोर तपस्या गर्दागर्दै एक हजार वर्ष व्यतीत भयो । देवराज इन्द्रको मनमा उहाँको परीक्षा लिने भावना जागृत भयो । त्यसैले उहाँ विष्णुरूप धारण गरेर लक्ष्मीसमीप आउनुभयो र वरदान माग्न भन्नुभयो । तपस्विनी लक्ष्मीले इन्द्रको यस भावलाई बुझ्नुभयो र वरदान दिनुपूर्व विश्वरूपको दर्शन दिन प्रार्थना गर्नुभयो । विश्वरूप प्रकट गर्न इन्द्र असमर्थ हुनुभयो । अत: उहाँ लज्जित हुँदै क्षमायाचना गर्दै फर्कनुभयो ।

लक्ष्मीको तपस्याको ख्याति भगवान् विष्णुले सुनी दर्शन दिन आउनुभयो र वरदान माग्न भन्नुभयो । लक्ष्मीले भन्नुभयो, 'यदि तपाईं साक्षात् नारायण हुनुहुन्छ भने आफ्नो विश्वरूपमा मलाई दर्शन दिनुभएर कृतार्थ गरिदिनुहोस् ।'

देवीको यस प्रार्थनालाई सुनेर भगवान् विष्णुले आफ्नो विश्वरूपको दर्शन दिनुभयो र आफ्नो इच्छित वर माग्न भन्नुभयो । यसपछि माता लक्ष्मीले उहाँलाई पतिरूपमा प्राप्त गर्ने इच्छा व्यक्त गर्नुभयो ।

पुराणमा लक्ष्मीको उत्पत्तिसँग सम्बन्धित एउटा अर्को कथा पनि पाइन्छ । महर्षि दुर्वासा, जो भगवान् शंकरको अंशभूत रूप हुनुहुन्छ, पृथ्वीतलमा विचरण गर्दै एउटा उपवनमा पुग्नुभयो जहाँ 'विद्याधरी' नामकी एक सुन्दरी आफ्नो हातमा पारिजातको माला लिएर उभिइरहेकी थिइन् । त्यस मालाको सुगन्धले पूरा वातावरण सुगन्धित भइरहेको थियो । विद्याधरीले उक्त माला दुर्वासा

**मन्त्र**

**।। श्रीं ।।**

# लक्ष्मी बीज मन्त्रको प्रयोग

*परमपूज्य सद्गुरुदेवहरुको असीम कृपा, अनुकम्पा एवं आदरणीय पाठक महानुभावहरुको प्रेम र स्नेहले गोरक्ष निखिल वाणीमा विविध विषयमा लेख, रचनाहरु प्रकाशित हुँदै आइरहेको छ। यस क्रममा हामीले यस अंकमा माता लक्ष्मीसँग सम्बन्धित एउटा अति नै सरल प्रयोग पनि प्रकाशित गरेका छौं। आशा छ, पाठकहरुले यसको समुचित लाभ लिनुहुनेछ ।*

लक्ष्मी प्राप्तिका लागि यो प्रयोग महत्वपूर्ण छ र यस बीज मन्त्रको प्रयोग कुनै पनि समयमा गर्न सकिन्छ । यस प्रयोगलाई सम्पन्न गर्नका लागि साधकले कुनै निश्चित स्थानमा बस्नु आवश्यक छैन र हातमा कुनै माला वा अन्य कुनै यन्त्र हुनु पनि आवश्यक छैन । अझ यस प्रयोगमा साधकले कुनै विशेष रङको वस्त्र पहिरिनुपर्ने पनि छैन, कुनै विशेष आसनको पनि आवश्यकता पर्दैन । यतिसम्म कि यस प्रयोगमा दीयो बाल्नु पनि आवश्यक छैन ।

यो त बीज मन्त्र हो। यसको निरन्तर मानसिक जप उठ्दा-बस्दा, सुत्दा-जाग्दा गर्न सकिन्छ। यस मन्त्रको जप पुरुष वा स्त्री जसले पनि कुनै पनि समयमा गर्न सक्दछ ।

यो एउटा अक्षरको बीज मन्त्र हो र भगवती लक्ष्मीको अत्यन्त प्रिय मन्त्र हो । यसको मानसिक जप गर्नु उचित छ र यसका लागि कुनै प्रकारको मन्त्र गणनाको पनि आवश्यकता छैन तथा यसलाई सधैं सम्पन्न गर्न सकिन्छ ।

**(स्रोत : लक्ष्मी प्राप्ति : परमपूज्य सद्गुरुदेव डा. नारायण दत्त श्रीमाली)**

ऋषिलाई प्रदान गरिन् जसलाई आफ्नो शिरमा धारण गरेर उहाँ भ्रमण गर्न लाग्नुभयो। केही अगाडि पुगिसकेपछि देवराज आफ्नो ऐरावत हात्तीमा आइरहनुभएको देख्नुभयो । ऋषिले उक्त माला ऐरावतको शिरमा राखिदिनुभयो। मालाको तीव्र सुगन्धलाई सहन नसकेको कारण ऐरावतले आफ्नो सूँढले माला भुइँमा फ्यालिदिए । यो देखेर दुर्वासा ऋषिले क्रोधोन्मत्त भएर इन्द्रलाई श्राप दिनुभयो, 'जुन मालालाई तिमीले प्रणामसम्म गरेनौ, त्यो पुष्पमाला मात्र थिएन अपितु लक्ष्मीको धाम थियो । यस्तो दिव्य मालाको अनादर गरेको हुनाले तिम्रो अधिकारमा रहेका समस्त लोकबाट लक्ष्मी अदृश्य हुनेछिन् ।'

ऋषिको श्रापलाई सुनेर देवराज इन्द्र ऐरावतबाट उत्रेर उहाँको चरणमा पर्नुभयो । तर दुर्वासा ऋषिले इन्द्रलाई झनै हकारेर जानुभयो । त्यसै क्षण लक्ष्मी तीनै लोकबाट अदृश्य हुनुभयो र देवताहरूलाई श्रीहीन भएको देखेर दैत्यहरूले उनीहरूमाथि हमला गरे । उत्साहहीन देवगण दैत्यहरूसँग हारेर ब्रह्माको शरणमा गए। समस्त देवताका साथ ब्रह्मा क्षीरसागरको उत्तर तटतर्फ जानुभयो र भगवान् विष्णुको स्तुति गर्न थाल्नुभयो । प्रसन्न भएर भगवान् विष्णुले आफ्नो मंगलमय स्वरूपमा उहाँलाई दर्शन दिनुभयो र देवताहरूको समस्याको हल बताउनुहुँदै भन्नुभयो, 'तिमीहरूले क्षीरसागरको मंथन गऱ्यौ भने अमृत उत्पन्न हुनेछ जसको पान गरेर तिमीहरू अजर अमर हुनेछौ । तर समुद्र मंथनको कार्य अत्यधिक दुष्कर हुनाले तिमीहरूले दैत्यहरूको पनि सहारा लिनुपर्दछ ।'

भगवान् विष्णुको आज्ञाबाट देवताहरू र दैत्यहरूले सन्धी गरेर समुद्र मंथनका लागि मन्दाराचल पर्वतको मदानी तथा वासुकीलाई डोरीको रूपमा उपयोग गरे । भगवान्ले दैत्यहरूलाई वासुकीको मुखतिर र देवताहरूलाई पुच्छरतिर राखिदिनुभयो । स्वयं भक्तवत्सल श्री भगवान् कछुवाको रूप धारण गरेर क्षीरसागरमा मन्दराचलको आधार बन्नुभयो ।

दैत्य र दानवहरूद्वारा संयुक्तरूपमा समुद्र मंथन गर्दा समुद्रबाट चौध रत्न प्रकट भए । ती चौध रत्नहरूमा अमृतकलश हातमा लिएर भगवान् धन्वन्तरी प्रकट हुनुभयो र चौधौं रत्नको रूपमा भगवती महालक्ष्मी प्रकट हुनुभयो । उहाँ कमलको फूलमाथि विराजमान हुनहुन्थ्यो, उहाँका श्रीअंगहरूको कान्तिबाट समस्त दिशा प्रकाशित हुन गयो । यस्ती त्रैलोक्य सुन्दरीलाई प्राप्त गरेर समस्त देवता र ऋषिगण हर्षित हुनुभयो। सबै देवताले वैदिक श्रीसूक्तद्वारा लक्ष्मीको स्तुति गरे। तत्पश्चात्

लक्ष्मी भगवान् विष्णुको वक्षस्थलमा प्रवेश गर्नुभयो । परम सुन्दरी लक्ष्मीलाई यसप्रकार लोप भएको देखेर दैत्यहरू अत्यधिक निराश भए । उनीहरूले भगवान् धन्वन्तरीको हातको अमृत कलश खोसे । तर भगवान् विष्णुले दैत्यहरूलाई आफ्नो योगमायाद्वारा मोहित गरेर सारा अमृत देवताहरूलाई दिनुभयो । त्यसपछि इन्द्रले अत्यन्तै श्रद्धा र भक्तिभावद्वारा भगवती लक्ष्मीको स्तुति गर्नुभयो जसबाट प्रसन्न भएर माता लक्ष्मीले इन्द्र तथा अन्य देवताहरूलाई इच्छानुसारको वरदान दिनुभयो ।

भगवान् विष्णुलाई लक्ष्मी अनन्य प्रिया हुनुहुन्छ र श्रीहरिको प्रत्येक अवतारमा लक्ष्मी पनि अवतरित भइरहनुहुन्छ । उहाँ श्रीरामको साथमा सीता र भगवान् श्रीकृष्णका साथमा रुक्मिणीको रूपमा अवतीर्ण हुनभयो । भगवान् विष्णुको साथमा लक्ष्मीको आराधना गर्नाले समस्त आध्यात्मिक एवं भौतिक उन्नति प्रगति हुन्छ । महालक्ष्मी साधुता एवं सतित्वकी प्रतिमूर्ति हुनुहुन्छ । अत: पवित्र स्त्रीलाई लक्ष्मी भनेर सम्मानित गरिन्छ । जो व्यक्ति मृदुभाषी, कार्यकुशल, क्रोधहीन तथा जितेन्द्रिय हुन्छ, उसको घरमा अवश्य नै माता लक्ष्मीको निवास हुन्छ । जहाँ लक्ष्मीको साधना हुन्छ, त्यहाँ सदैव धर्म, सम्पत्ति एवं सुयशको वृद्धि हुँदै रहन्छ ।

**लक्ष्मीको प्रभाव क्षेत्र :**

भगवती लक्ष्मीको प्रभाव क्षेत्र अत्यन्त व्यापक छ । जीवनको कुनै पनि क्षेत्र उहाँको प्रभावबाट अछुतो रहेको देखिँदैन । भोजन, वस्त्र, आवास, लोकाचार, सामाजिक नियम निर्वाह, दान, पूजन, अतिथि सेवा, देवाराधना, साधु सत्कार, यज्ञ, तीर्थयात्रा, परोपकार, सेवा, सहायता सबैको आधार धन हो । धनको दोस्रो रूप लक्ष्मी अर्थात् उहाँको कृपादृष्टि हो ।

धनहीन जीवन अत्यन्तै कष्टप्रद हुन्छ । निर्धन व्यक्ति विभिन्न अभावबाट पीडित भएर समाज र परिवारबाट तिरस्कृत, बहिस्कृत हुन जान्छ । त्यो सर्वत्र अपमानित हुन्छ । मानिसहरू उसलाई भाग्यहीन, अभागी, अशुभ, दरिद्र भनेर खिल्ली उडाउँछन् । धनहीन मानिसहरू जहाँ गए पनि लाञ्छना, अनादर र विडम्बनाका पात्र बन्दछन् ।

जसरी प्रतिभा, वाणी, स्मरणशक्ति, स्वर, सम्मोहन आदिका लागि देवी सरस्वतीको कृपा अनिवार्य छ, त्यसैगरी भौतिक समृद्धिका लागि माता लक्ष्मीको दया हामीलाई परम आवश्यक छ । जबसम्म माता लक्ष्मी कृपालु हुनुहुन्न, मनुष्य नाना प्रकारका अभावबाट ग्रस्त रहन्छ । माता लक्ष्मीको कृपा हुनासाथ धन, सम्पत्ति प्राप्त हुन्छ र धनाभावमा जो व्यक्ति तिरस्कारको पात्र थियो, उही व्यक्ति सर्वत्र पूज्य, वरणीय र प्रशंसित हुन पुग्छ । भौतिक दृष्टिबाट संसारमा अर्थको अत्यन्तै महत्त्व छ । यसै आधारमा लक्ष्मी अर्थात् धनलाई सर्वगुण सम्पन्न भनिन्छ । नीति वाक्य पनि पाइन्छ :

**यस्यास्ति वित्त स नरः कुलीनः**

**स पण्डितः स श्रुतिवान् गुणज्ञः ।**

**स एव वक्ता स च दर्शनीय**

**सर्वेगुणा काञ्चनमाश्रयन्ति ॥**

अर्थात् सुवर्ण धन जोसित हुन्छ, ऊ सर्वगुण सम्पन्न मानिन्छ । संसारले उसको सबै प्रकारले पूजा, प्रशंसा गर्दछ ।

लक्ष्मीको प्रशंसा हाम्रो भौतिक संसारमा मात्र होइन, स्वर्गलोकमा पनि गरिन्छ । देवराज इन्द्र आफ्नो वैभवका लागि प्रसिद्ध छन् । लंकेश रावणको वैभवका बारेमा कसलाई थाहा छैन र ? यी सबै लक्ष्मी माताका लीला विलास नै त हुन् । माता जोसँग प्रसन्न हुनुभयो, उसलाई विश्वविश्रुत गरिदिनुभयो । जोसँग उहाँ रिसाउनुभयो, ऊ स्वजनमा पनि उपेक्षित हुन पुग्यो ।

**लक्ष्मी माताको आराधना**

भगवती लक्ष्मीको आराधना गर्ने अनेक विधान छन् । विभिन्न प्रकारका स्तुति, पूजा, पाठ, तंत्र-मंत्र-यंत्र र हवनको उल्लेख प्राचीन ग्रन्थहरूमा पाइन्छ । ती समस्त साधनाविधि सबैका लागि सहजसाध्य नहुन सक्छ । आजको अस्त-व्यस्त युगमा कदाचित नै कुनै साधक विधानपूर्वक त्यस्तो साधना गर्न सकोस् जसको वर्णन शास्त्रमा गरिएको हुन्छ ।

अत: व्यावहारिकरूपमा सरल र साध्य साधना पद्धति नै वर्तमान समयमा उपयुक्त हुन्छ । यी सबै नियम, विधान र प्रयोग बहुपरीक्षित र अनुभूत छन् । विभिन्न ग्रन्थहरूमा बडो प्रशंसाका साथ यिनको प्रामाणिकताको वर्णन गरिएको छ । तर पनि बिना आस्था, श्रद्धा, भक्ति र नियमपालन कुनै पनि साधना सफल हुनै सक्तैन । उपास्यप्रति अनन्य श्रद्धा र पूर्ण निष्ठाका साथ स्वयंलाई उपास्यको शरणमा भएको धारणा बनाउनु र स्वयंलाई आराध्यको चरणमा समर्पित गर्नुमा नै साधना फलदायी हुने गर्दछ र यी सम्पूर्ण कुराका लागि केन्द्रविन्दुको रूपमा गुरुले काम गर्नुहुन्छ । गुरु नै श्रद्धा, निष्ठा, भक्ति, आस्थाको मूल स्रोत हुनुहुन्छ । भक्तमा यी सद्‌गुणहरूको स्थिरता सद्‌गुरुबाट मात्र हुन सक्छ । चंचल मनलाई उपास्यप्रति दृढ र एकाग्र गराउन सक्ने क्षमता केवल सद्‌गुरुमा मात्र हुन्छ । गुरुकृपाबाट नै उपास्यको शरणागति पाएर उपासकको कल्याण हुन्छ । त्यसैले सर्वप्रथम गुरुको संगत र सम्पर्कमा नगई कोही पनि श्री र श्रीवान् बन्न सक्दैन । गुरुको श्रीचरणमा आफूलाई सुम्पेर उहाँबाट निर्देशित साधना पद्धतिमा अघि बढ्नाले जो कोहीले पनि लक्ष्मीको कृपा, आशीर्वाद पाउन सक्दछ भन्ने कुरालाई सिद्धाश्रम शक्ति केन्द्र, नेपालले वर्षौंदेखि प्रमाणित गर्दै आइरहेको छ । तपाईं पनि एकपटक यस आश्रमसँग जोडिएर र यहाँबाट सम्पन्न भइरहेका विभिन्न साधना, हवन, पूजनमा भाग लिएर माता लक्ष्मीलगायत अन्य देवीदेवताहरू, गन्धर्व, यक्ष, किन्नर, अप्सरा, पितृदेवहरूको कृपा, आशीर्वाद प्राप्त गर्न सक्नुहुनेछ । अन्य जानकारीका लागि नजिकैका सम्पर्क कार्यालयहरूमा पनि यहाँहरू पाल्न सक्नुहुनेछ । आशा छ, केन्द्रीय कार्यालयलगायत हाम्रा सम्पर्क कार्यालयहरूमा सम्पर्क राखी यहाँहरूले यसपालिको दीपावली पर्वलाई आनन्दमय, गौरवमय बनाउनुभएर आफ्नो जीवनलाई वैभव र ऐश्वयले सम्पन्न गर्नुहुनेछ । अस्तु ।

जय गुरुदेव !

# साधना/अनुष्ठानबाट धनपति बन्न सकिन्छ

संसारमा साधना/अनुष्ठान र धार्मिकतालाई एउटै रूपमा ग्रहण गर्ने गरिन्छ । तर यी दुई बीचमा रहेको भिन्नतालाई हेर्ने हो भने आकाश जमीनको फरक पाइन्छ। यी दुई कुरा अलग-अलग कुरा हुन्। यी दुई बीचको फरक अर्थलाई केलाउन जान्यौं भने हामीले साधना/अनुष्ठानबाट पाउने लाभहरुबाट कहिल्यै वञ्चित भएर बस्नुपर्ने छैन । जति-जति यी दुई बीचको अन्तरलाई बुझ्छौं त्यति-त्यति जीवनमा सफलता र उच्चता प्राप्तिमा हाम्रा पाइलाहरु अघि बढ्दै जानेछन्।

**परिश्रम र लक्ष्मी**

परिश्रमबाट भाग्यको निर्माण हुन सक्छ भन्ने कथन व्यावहारिकरूपमा हेर्ने हो भने गलत सावित हुन्छ । हामीहरुमध्ये प्रायःजसोले सबैतिर देख्दै र सुन्दै आइरहेकै छौं कि व्यक्तिले परिश्रम त खुब गर्दछ, हड्डी खियाउँछ, रगत-पसिना बगाउँछ, कठिनभन्दा कठिन कार्य पनि गर्दछ तर पनि ऊ आफ्ना जीवनका अत्यावश्यक आवश्यकताहरु पनि पूरा गर्न समर्थ हुँदैन । यसैले परिश्रमबाट भाग्यको निर्माण हुन्छ भन्नु केवल शब्द प्रवंचना हो, वास्तविकतासँग यसको कुनै सम्बन्ध छैन ।

जीवनमा यस्ता सैकडौं उदाहरणहरु पाइन्छन् जसमा मानिसले साधना वा अनुष्ठान गरेर सफलता हात पारेका छन् । जीवनको उत्तरार्द्धसम्म पनि व्यक्ति दरिद्रताको छायाँबाट ग्रसित नै रह्यो, उसले जीवनका आवश्यकता

पनि पूरा गर्न सकेन तर साधनाद्वारा अथवा एउटा निश्चित अनुष्ठान पूरा गरेपछि त्यो आर्थिक दृष्टिले पूर्ण सम्पन्न हुन सक्यो । ती व्यक्तिहरु आज पनि समाजमा श्रेष्ठ सम्मान प्राप्त गरेर बसिरहेका छन् ।

समाजमा देखिन्छ कि धार्मिक व्यक्तिहरु पनि दरिद्र र अभावग्रस्त हुन्छन् । यस्तो अवस्थामा हामी भगवान्को विधानमा आश्चर्य प्रकट गर्दै भन्दछौं कि भगवान्को घरमा न्याय छैन, फलाना व्यक्ति धर्मात्मा हो, नित्य चार-पाँच घण्टा पूजा गर्छ, भगवान्को स्मरण गर्दछ, व्रत-उपवास बस्दछ फेरि पनि दरिद्र, अभावग्रस्त छ जबकि चलाख, धूर्त, समाजघातकहरु नै सम्पन्न देखिन्छन् ।

धार्मिक हुनु, पूजा-पाठ गर्नु, भगवान्को नाम लिनु बेग्लै कुरा हो । यो निश्चित हो कि यदि सही प्रकारले साधना वा अनुष्ठानलाई सम्पन्न गरिन्छ भने यसबाट जीवनको दरिद्रता मेटिन्छ, आर्थिक अभाव समाप्त हुन्छ र जीवनका समस्त सुविधाहरु र भौतिक सुख प्राप्त गर्न सकिन्छ ।

**लक्ष्मी उपासना सबैका लागि**

शास्त्रले देवताहरुमा श्रेष्ठ भगवान् विष्णुकी पत्नीको रूपमा लक्ष्मीलाई स्थान दिएर उहाँलाई श्रेष्ठता र उहाँको महत्त्वलाई सिद्ध गरेको छ । यो स्पष्ट छ कि लक्ष्मीसँग सम्बन्धित उपासना हाम्रो जीवनको आवश्यक उपासना हो । हामी चाहे कुनै पनि मतका अनुयायी किन नहोऔं, कुनै पनि धर्मलाई पालन गर्ने किन नहोऔं, कुनै पनि विचारधारासँग सम्बन्धित भए पनि हामीले लक्ष्मीको प्राप्ति र उहाँको महत्त्वलाई स्वीकार गर्नैपर्दछ ।

समाजका मान्यताहरु बदलिरहन्छन् । एउटा समय यस्तो पनि थियो कि जुन बेला धनलाई अधिक महत्त्व दिइँदैनथ्यो । धन जीवन र विनिमयको आधार अवश्य थियो, तर धन नै सबै कुरा भने थिएन । तर समाजको मान्यता र विचार बदलिएको छ । हामीहरु समाजकै एउटा एकाइ हुनाले समाजसँगसँगै हामीलाई पनि बदलिनु आवश्यक भयो । अत: हामीलाई यो स्वीकार गर्नु आवश्यक भएको

# गणेशका साथ लक्ष्मी पूजाको रहस्य

जगदम्बा लक्ष्मीको पूजा जुनसुकै तरीकाले गर्ने गरिए पनि पूजासम्बन्धी वैचारिक भिन्नता भने विद्वान्हरूबीच पाइन्छ । सबैभन्दा धेरै मान्यता जुन विचारलाई प्राप्त छ त्यो यो हो कि लक्ष्मीको पूजा भगवान् गणेशका साथ गर्नुपर्दछ किनकि उहाँ विघ्नविनाशक हुनुहुन्छ । दीपावलीका दिन घर-घरमा लक्ष्मी-गणेशको पूजाको प्रचलन रहेको छ । लक्ष्मीको बारेमा यस सर्वप्रचलित मान्यतामाथि कसैबाट कहिल्यै पुनर्विचार भएन ।

'श्री लक्ष्मी नारायण साधना रहस्य'को निचोड यो हो कि प्रचलित लक्ष्मी-गणेश आराधना जीवनमा सुख र समृद्धिका लागि अवांछनीय त छैन तर पूर्णत: उचित पनि छैन । यसको कारण यो हो कि यसबाट हामीले जान अनजानमा लक्ष्मीलाई उहाँका प्राणेश्वर नारायण अर्थात् विष्णु भगवान्बाट अलग गर्ने प्रयास गर्दछौं । श्रीविष्णु लक्ष्मीका पति हुनुहुन्छ, जबकि गणेश मानस पुत्र । पुत्रका साथ आह्वान गर्नाले लक्ष्मी आराधक कहाँ आउनु त हुन्छ तर थोरै समयका लागि मात्र । जसरी आमा आफ्नो छोरा कहाँ आउँछिन्, उसलाई स्नेह प्रदान गर्छिन्, उसको लालनपालन गर्छिन् र ठूलो भएपछि उसलाई जीवन संघर्षका लागि अगाडि प्रेरित गर्छिन् । तर उनको स्थायी सम्बन्ध त आफ्ना पतिदेवका साथ नै हुन्छ, यसैगरी गणेशका साथ लक्ष्मीको पूजाबाट सुख, सम्पत्ति त आउँछ, तर त्यो अस्थायी हुन्छ । स्थायी सुख-समृद्धिका लागि लक्ष्मीको आराधना नारायण अर्थात् श्रीविष्णुसँग नै गर्नु पर्दछ ।

छ कि हाम्रो जीवनमा पूर्णता प्राप्तिका लागि अन्य तत्त्वहरुका साथसाथै धनको पनि उत्तिकै महत्त्व छ ।

तर यस कुरालाई ध्यानमा राख्नु आवश्यक छ कि धन अनैतिक कार्यहरुबाट एकत्र हुन नपाओस्, गतल तरीकाले धनको संचय नहोस्, कसैलाई धोका दिएर वा हानि पुऱ्याएर हामी सम्पन्न नबनौं । इज्जत, मान-मर्यादा, शास्त्रीय नियमहरुको अनुकूल विचारहरुका साथसाथ परिश्रमद्वारा धन एकत्र गरौं र श्रीसम्पन्न बनौं । धनलाई जीवनको शत्रु ठान्ने, धर्मको बाटोमा बाधक ठान्नेहरु वास्तवमा कायर हुन्, नपुंसक हुन्, अल्छी र आफैले आफैलाई धोका दिने हुन् । उनीहरु स्वयं यस कुरामा दृढ छन् कि आजको युगमा चाहे धार्मिक कार्य सम्पन्न गर्न होस् वा समाजलाई सहयोग दिन, साधु-सन्त-संन्यासीहरुलाई सुविधा दिन

होस् वा अन्य कार्य गर्न धनकै आवश्यकता पर्दछ । आजको युगमा बिनाधन धर्मको पनि अस्तित्व सम्भव छैन । यसैले धनको महत्ता सर्वोपरि छ र यो महत्ता मानवको प्रारम्भिककालदेखि आजसम्म रहेको छ । यसैले शास्त्रहरुमा भनिएको पाइन्छ– व्यक्ति श्रीसम्पन्न हुनुपर्दछ, श्रीसम्पन्न व्यक्ति नै समाज र देशको आभूषण हो ।

आज जुन ठूला ठूला आश्रमहरु देखिन्छन्, के बिनाधन ती आश्रमहरु स्थापित भए होलान् ? जताततै ठूलठूला मन्दिरहरु देखिन्छन् जसमा गएर हामी देवताहरुका साम्‍ु अभिभूत हुन्छौँ, यसबाट हाम्रो मनमा शुद्ध संस्कार जागृत हुन्छ, यी मन्दिरहरु बिनाधन सम्भव छन् ? ठूलठूला गुरुद्वार, चर्च र मस्जिद बिनाधन सम्भव छन् ? वास्तवमा यी कुराहरुको निर्माणमा मूल तत्त्व धन नै हो जसको माध्यमबाट यिनीहरुको निर्माण सम्भव भयो ।

**लक्ष्मी प्राप्तिमा भाग्य पक्ष**

तर परिश्रमबाट मात्रै धन संचय हुँदैन, केवल शिक्षा प्राप्तिबाट मात्रै लक्ष्मीपति बन्न सकिँदैन । हाम्रो समाजमा चारैतिर सैकडौँ युवा-युवतीहरु जो एम.ए. पास छन्, तर तिनीहरुमध्ये अधिकांश त बेरोजगार वा सीमित तलबमा जीवन यापनका लागि बाध्य छन् । हामी दिनको आठ वा दस घण्टासम्म मजदुरहरुलाई परिश्रम गरिरहेका देख्छौँ, तर पनि तिनीहरु जीवनका न्यूनतम आवश्यक वस्तुहरु सुलभ गर्न सक्दैनन् । यसबाट स्पष्ट हुन्छ कि केवल मात्र परिश्रम र शिक्षा नै सबै होइन, यिनीहरुको माध्यमबाट मात्रै लक्ष्मीपति वा श्रीसम्पन्न बन्नु सम्भव छैन ।

व्यापारमा पनि हामी देख्छौँ कि मानिसहरु परिश्रम गर्छन्, आफ्नो तर्फबाट पूरा प्रयत्न गर्छन् । ठूलठूला पसलहरु खोल्छन् तर यति गरेर पनि धन एकत्र होस्, यो सम्भव छैन । यसको विपरीत हामी यो देख्दछौँ कि जसको सानो सुन्दर पसल छ, त्यसले धेरै कमाइरहेको छ, सम्पन्न बनिरहेको छ, यस्ता पनि निरक्षर धनाढ्यहरु देखिन्छन् जसलाई राम्रोसँग चार पंक्ति लेख्न पनि आउँदैन, तर उनीहरु करोडपति, अरबपति छन् ।

परिश्रम वा शिक्षाका अतिरिक्त हाम्रो जीवन-निर्माण र जीवनको सम्पन्नतामा भाग्यको पनि अत्यन्तै ठूलो हात छ भन्ने कुरामा दुईमत छैन । भाग्य भएमा व्यक्ति सामान्य श्रेणीबाट धेरै माथि उठ्दछ । तर भाग्य लेखन त विधाताको हातमा छ । विधाताले जब मानिसलाई यस संसारमा पठाउनुहुन्छ तब उसको भाग्यको लेखन हुन्छ । यसैले भाग्य लेखनमा हाम्रो कुनै सम्बन्ध हुँदैन ।

**तन्त्रबाट भाग्य परिवर्तन**

भाग्यमा परिवर्तन साधना वा अनुष्ठानबाट मात्र हुन सक्दछ । अनुष्ठान भनेको एउटा विशेष प्रकारको क्रिया सम्पन्न हुनु हो जसमा निश्चित तरीकाबाट, निश्चित प्रकारबाट मन्त्र जप गरेर त्यस कार्यको सिद्धिलाई प्राप्त गरिन्छ जसबाट हाम्रो भाग्यमा यदि निर्धनता छ भने पनि त्यसलाई अनुकूल बनाउन सकिन्छ ।

लक्ष्मीसँग सम्बन्धित साधना-अनुष्ठान शुद्ध, सात्विकरूपमा मन्त्र साधना वा तन्त्र साधनाको माध्यमबाट सम्पन्न गर्न सकिन्छ । शास्त्रहरुमा लक्ष्मीसँग सम्बन्धित कैयौँ अनुष्ठान र साधनाहरु व्यक्त गरिएको पाइन्छ जुन तन्त्रसँग पनि सम्बन्धित छन्, मन्त्रसँग पनि सम्बन्धित छन् । “**तन्त्र**” आफैमा दूषित वा हेय छैन । “**तन्त्र**” एक पवित्र र श्रेष्ठ शब्द हो जसको तात्पर्य राम्रोसँग कार्यलाई व्यवस्थित गर्नु हो । “**तन्त्र**” कुनै पनि सम्बन्धित मन्त्रलाई सुचारुरूपले सम्पन्न गर्ने क्रियालाई भनिन्छ । तान्त्रिक ग्रन्थहरुमा एक ठाउँमा पनि मद्य, मासु, सम्भोग आदिलाई प्रश्रय दिइएको छैन । यो त पछि कामी तथा भोगी तान्त्रिकहरुले आफ्नो स्वार्थपूर्तिका लागि यी तत्त्वहरुलाई “**तन्त्र**” मा आवश्यक बनाएका हुन् । यसबाट “**तन्त्र**” शब्द समाजबाट बदनाम हुन गयो । “**तन्त्र**”प्रतिको यो भ्रान्ति हट्नु आजको ठूलो आवश्यकता हुन पुगेको छ । जय गुरुदेव !

## लक्ष्मीको वाहन उल्लू नै किन ?

भगवान् श्रीविष्णुकी परमप्रिय लक्ष्मी जब आफ्ना पतिदेवका साथ कसैकहाँ जानुहुन्छ भने उहाँ भगवान् विष्णुको काखमा बसेर गरुडमा सवार गर्नुहुन्छ । परन्तु यदि कोई भगवान् श्रीविष्णुलाई छोडेर लक्ष्मीको मात्र आह्वान गर्छ भने दिनमा देख्न नसक्ने विनाशको प्रतिनिधि उल्लू नै उहाँको वाहन हुन्छ ।

हामीलाई यो थाहा छ कि गरुडको दर्शनलाई समाजले समस्त मंगलको मूल मान्छ भने उल्लूलाई उजाड घर चाहने अशुभ जनावरको रूपमा लिइन्छ ।

अतः जुन व्यक्तिकहाँ जप, पूजा-पाठ, ईश्वर आराधना, देव-पितृ कर्म, दान-पुण्य र अतिथि सत्कार हुन्छ त्यहाँ बुझ्नुपर्छ कि लक्ष्मी आफ्ना पतिदेव श्रीमन्नाराणसहित आउनुभएको छ र जहाँ अनाचार, पापाचार, व्यभिचार, दुराचार र प्रमादको बोलवाला छ, देश-जाति-धर्म रक्षाका आवश्यक कार्यलाई देखेर पनि आँखा बन्द गरिन्छ, रक्सी, वेश्यागमन र मुद्दामामिलामा रूपैँयाको अपव्यय गरिन्छ भने मान्नुपर्दछ कि त्यहाँ लक्ष्मी एक्लै आउनुभएको छ । वेदले नारायणसहित लक्ष्मीको प्रशंसा गरेको छ– ‘**रमन्तां पुण्या लक्ष्मीर्या पापीस्ता अनीनशम् ॥**’ अर्थात् पुण्या लक्ष्मी हाम्रो घरमा रमण गर्नुहोस् र जो अनर्थ मूल पापिनी छ, त्यो विनष्ट होस् ।

# लक्ष्मी साधना-अनुष्ठान र लाभहरु

शास्त्रमा उल्लिखित लक्ष्मीसम्बन्धी साधना-अनुष्ठान गर्नाले निम्नलिखित लाभ स्वत: मिल्न लाग्दछ र यी लाभ वा यिनीहरुमध्ये अधिकांश लाभ समग्ररूपमा प्राप्त हुन लाग्दछन् । लक्ष्मीसम्बन्धी कुनै पनि अनुष्ठान वा साधना सम्पन्न गर्नेलाई निम्न लाभहरु प्राप्त हुन्छन् भन्ने विधान पाइन्छ–

- आर्थिक उन्नति हुन लाग्दछ ।
- दरिद्रता समाप्त हुन्छ र नयाँ-नयाँ लाभ अनुभव हुन लाग्दछ ।
- अर्थ प्राप्तिसँग सम्बन्धित बाधाहरु हट्दछन् ।
- मनोवांछित नोकरी प्राप्त भएर बेकारी समाप्त हुन्छ ।
- यदि नोकरीमा बाधाहरु आइरहेका छन् भने वा अनुकूलता प्राप्त भइरहेको छैन भने बाधाहरु समाप्त भएर अनुकूलता प्राप्त हुन्छ ।
- यदि नोकरीमा उन्नति भइरहेको छैन भने उन्नति वा बढुवा हुन्छ ।
- नोकरीमा यदि हाकिमसँग मतभेद भएर त्यसबाट बाधाहरु आइरहेका छन् भने अथवा परस्पर मनमुटाव तथा कठिनाइ आइरहेको छ भने त्यो हट्दछ ।
- यदि व्यापार प्रारम्भ गर्ने इच्छा भएमा त्यसका लागि अवसर प्राप्त हुन्छ ।
- व्यापार ठप्प भएमा व्यापार प्रारम्भ हुन्छ र बाधाहरु हट्दछन् ।
- यदि व्यापारमा अनुकूलता अनुभव भइरहेको छैन भने अनुकूलता प्राप्त हुन थाल्दछ ।
- यदि व्यापारमा सफलता प्राप्त भइरहेको छैन भने सफलता मिल्न थाल्दछ ।
- यदि मनोवांछित व्यापार छैन भने मनोवांछित व्यापार शुरु हुन थाल्छ ।
- यदि दरिद्रता छ भने त्यो समाप्त हुन जान्छ ।
- यदि व्यापारमा राज्य बाधा (आयकर, बिक्रीकरको बाधा) छ भने यससँग सम्बन्धित कठिनाइहरु हट्दछन् ।
- यदि व्यापार सफलतापूर्वक चलिरहेको छैन भने त्यो सफलतापूर्वक चल्न थाल्दछ ।
- यदि बजारमा व्यापारको प्रतिष्ठामा कमी आएको छ भने पुन: प्रतिष्ठा बन्न जान्छ ।
- व्यापारमा श्रेष्ठता प्रारम्भ हुन जान्छ र पूर्णता आउन लाग्दछ ।
- नयाँ व्यापार प्रारम्भ हुन्छ र सबै प्रकारका व्यापारमा सफलता मिल्न लाग्दछ ।
- यदि तपाईं कुनै व्यवसाय जस्तै– वकालत, घरेलु कार्य, पूजा-पाठ, सम्पादन, लेखन वा यस्तै कार्यहरुमा हुनुहुन्छ भने यी कार्यहरुमा सफलता मिल्न लाग्दछ र मनोवांछित सफलता प्राप्त हुन्छ ।
- कुनै पनि कार्य संयोजनमा बाधाहरु आउँदैनन् र सफलता मिल्न लाग्दछ ।
- आर्थिक अभाव समाप्त हुन्छ र घरमा धन एकत्र हुन लाग्दछ ।
- मनमा प्रसन्नता बढ्दछ, चिन्ताहरु हट्दछन् तथा आर्थिक समस्याहरु रहँदैनन् ।
- समाजमा सम्मान एवं यश प्राप्त हुन लाग्दछ ।
- यदि बर्बाद हुने स्थिति आएको छ भने त्यो परिवर्तित भएर समाजमा सम्मान प्राप्त हुन्छ ।

- पूर्ण पुरुषत्व प्राप्त हुन्छ, सन्तान यदि बिग्रेका छन् भने वा सहयोग दिइरहेका छैनन् भने ती अनुकूल हुन्छन् ।
- पति-पत्नीका मतभेद दूर हुन्छन् तथा गृहस्थ जीवन अनुकूल हुन्छ ।
- घरमा पूर्णरूपमा सुख-शान्ति तथा आनन्दको वातावरण बनिरहन्छ ।
- धार्मिक र सामाजिक कार्य सम्पन्न हुन्छन् र जीवनमा कुनै प्रकारको पनि अभाव रहँदैन ।
- जीवनका जति पनि भोग छन्, तिनमा सफलता मिल्न लाग्दछ । विदेश यात्रा, धार्मिक कार्य, पुरुषत्व प्राप्ति, सन्तान प्राप्ति, सन्तान सुख आदि प्राप्त हुन्छन् ।
- जीवनमा जति पनि समस्याहरु अनुभवमा छन्, ती सबै दूर हुन्छन् ।
- माथि लेखिएबाहेक जीवनका जति पनि समस्याहरु छन्, ती सबै समस्याहरु हटेर पूर्ण सुख, सन्तोष, सम्मान, यश, वैभव प्राप्त हुन्छ र व्यक्ति आफ्नो जीवनमा पूर्णरूपमा भोगलाई भोगेर अन्तमा धार्मिक कार्य सम्पन्न भएर मोक्ष प्राप्त गर्दछ ।

**द्रष्टव्यः** साधनामा सफलता प्राप्त गर्नु ढिलो कार्य हो । कैयौँपटक पूर्वजन्मकृत दोषहरुको कारणबाट सफलता प्राप्त नभइरहेको हुन सक्छ । कैयौँपटक त एउटै साधनालाई धेरैपटक सम्पन्न गरेपछि मात्र सफलता प्राप्त हुन्छ । अतः आफूमाथि विश्वास तथा गुरु, मन्त्र एवं साधनामा अटुट आस्था भएमा मात्र साधनामा सफलता सम्भव हुन्छ ।

जय गुरुदेव !

(परमपूज्य सद्गुरुदेव डा. नारायण दत्त श्रीमालीज्यूको 'लक्ष्मी प्राप्ति' पुस्तकबाट अनुदित ।)

# लक्ष्मी चञ्चल किन ?

धनकी देवी लक्ष्मी भगवान् विष्णुकी वामांगी भएर पनि किन चंचल हुनुहुन्छ भन्ने वर्णन शास्त्रमा गरिएको पाइन्छ । देवलोकमा धेरै यस्ता देवदेवीहरु हुनुहुन्छ जो स्वभाव र प्रकृतिले एक अर्काको विपरीत हुनुहुन्छ तर उहाँहरुको दाम्पत्य एक अर्काको पूरक हुन्छ । लक्ष्मी पनि यसैको एउटा कडी हुनुहुन्छ । भगवान् विष्णु जो गम्भीर र धैर्यवान् हुनुहुन्छ, जसको स्वरूप शाश्वत् र चिरस्थायी छ, उहाँकै पत्नी लक्ष्मी चंचल हुनुहुन्छ । उहाँ कहीं पनि धेरै समयसम्म बस्नुहुन्न । विचार र उद्देश्य एकै भए पनि यस्ता अनेकौं दम्पतिहरुको उदाहरण पाइन्छ जसको स्वभावमा असमानता हुन्छ । शंकर-पार्वतीको स्वभाव र प्रकृतिमा अन्तर छ ।

यो प्रकृतिको नियम हो कि दम्पति एउटै स्वभाव र प्रकृतिको छ भने जीवनमा जडता आउँछ । हामीले व्यावहारिक जीवनमा पनि देख्छौं कि पति-पत्नीको स्वभावमा अन्तर देखिए पनि दाम्पत्य जीवन सुचारुरूपमा चलिरहेको हुन्छ । अतः सृष्टिको शाश्वत् नियमअनुसार भगवान् विष्णुदेखि भगवती लक्ष्मी विपरीत हुनुहुन्छ । प्रायशः देखिन्छ कि धन-सम्पत्ति, ऐश्वर्य कसैसँग पनि धेरै समयसम्म टिक्दैन । यसैसम्बन्धी प्रश्न नारदले ब्रह्मासँग सोध्नुभएको थियो । उहाँले सोध्नुभयो– 'लक्ष्मी चंचला किन हुनुहुन्छ ?'

ब्रह्माले भन्नुभयो– 'यदि लक्ष्मी कसै कहाँ स्थायी भएर रहे त व्यक्तिले धर्तीमा आफ्नो अभिमानबाट चूर भएर धेरै कुकर्म गर्नेछ ।' यही कारणको निवारणका लागि देवयोगबाट भगवती लक्ष्मीलाई चंचल मन प्रदान भएको हो । यस सम्पूर्ण त्रैलोक्यमा लक्ष्मी यदि कसैको अधीन हुनुहुन्छ भने उहाँ हुनुहुन्छ भगवान् विष्णु जसको गुरुत्वमा लक्ष्मीको अस्तित्व विलीन भएको छ । अतः लक्ष्मीलाई प्रसन्न गर्नुपूर्व भगवान् विष्णुलाई प्रसन्न गर्नु आवश्यक छ ।

युगौंदेखि बहँदै आइरहेको धनको प्रवाहलाई रोक्न कसैले सकेको छैन । धन र ऐश्वर्यको मदमा प्राणी यो भुल्दछ कि यो उसको पूर्वजन्मको सत्कर्मको फल हो । तर व्यक्तिले लक्ष्मी चंचला हुनुहुन्छ भन्ने बिर्सेर धनको मदमा चूर भएर गलत कार्य गर्दछ । केही समयपछि लक्ष्मी उसबाट चलायमान हुन्छ ।

**यो दुर्लभ स्तोत्र परमपिता ब्रह्माले देवराज इन्द्रलाई प्रदान गर्नुभएको थियो । यसै स्तोत्रद्वारा सबै देवगण भगवती महालक्ष्मीको स्तुति गर्दछन् । एउटा पौराणिक प्रसंगअनुसार एक समयमा जब इन्द्रलगायत समस्त देवगण दानवहरूबाट भयभीत भएर त्रिदेवको शरणमा जानुभयो, तब भगवान् श्रीहरि विष्णुले परमपिता ब्रह्माद्वारा बताइएको विधिबाट भगवती महालक्ष्मीको पूजन गर्ने सल्लाह देवताहरूलाई दिनुभयो । देवीभागवतअनुसार जब इन्द्रादि देवताहरूको पूजनबाट प्रसन्न भएर भगवती महालक्ष्मी प्रकट हुनुभयो, तब देवराज इन्द्रसहित समस्त देवगणले ब्रह्माजीको कृपाबाट प्राप्त सम्पूर्ण अभीष्ट प्रदान गर्न सक्षम स्तोत्रराजद्वारा भगवती महालक्ष्मीको स्तुति गर्नुभयो । त्यही दुलर्भ एवं समस्त मनोकामनाहरूलाई पूरा गरिदिने स्तोत्र यहाँ प्रस्तुत गरिएको छ ।**

**नमः कमलवासिन्यै नारायण्यै नमो नमः ।**

**कृष्ण प्रियायै सततं महालक्ष्म्यै नमो नमः ॥**

भगवती कमलवासिनीलाई नमस्कार छ । देवी नारायणीलाई बारम्बार नमस्कार छ । कृष्णप्रिया भगवती महालक्ष्मीलाई निरन्तर नमस्कार छ ।

**पद्म पत्रेक्षणायै च पद्मास्यायै नमो नमः ।**

**पद्मासनायै पद्मिन्यै वैष्णव्यै च नमो नमः ॥**

कमलको पत्रसमान नयन भएकी कमलमुखी भगवती महालक्ष्मीलाई नमस्कार छ । पद्मासना, पद्मिनी एवं वैष्णवी नामबाट शोभित भगवती महालक्ष्मीलाई बारम्बार नमस्कार छ ।

**सर्वसम्पत्स्वरूपिण्यै सर्वाराध्यै नमो नमः ।**

**हरिभक्तिप्रदात्र्यै च हर्षदात्र्यै नमो नम ः ॥**

सर्वसम्पत्स्वरूपिणी सर्वाराध्या देवीलाई नमस्कार छ । भगवान् श्रीहरिको भक्ति उत्पन्न गर्न तथा हर्ष प्रदान गर्नमा परम कुशल देवीलाई बार-बार नमस्कार छ ।

**कृष्णवक्षः स्थितायै च कृष्णेशायै नमो नमः ।**

**चन्द्रशोभास्वरूपायै रत्नपद्मे च शोभने ॥**

हे रत्नपद्मे ! हे शोभने ! हजूर भगवान् श्रीकृष्णको वक्षस्थलमा विराजमान भएर कार्य गर्नुहुन्छ । तपाईंको स्वरूप चन्द्रमाको समान सुन्दर छ । यस्ती हजूरलाई म बार-बार प्रणाम गर्दछु ।

**सम्पत्यधिष्ठातृ देव्यै, महादेव्यै नमो नमः ।**

**नमो बुद्धिस्वरूपायै वृद्धिदायै नमो नमः ॥**

सम्पूर्ण सम्पत्तिकी अधिष्ठात्री महादेवीलाई बार-बार नमस्कार छ । बुद्धिस्वरूपा एवं वृद्धिप्रदा भगवतीलाई कोटि-कोटि प्रणाम छ ।

**बैकुण्ठे या महालक्ष्मीर्या लक्ष्मीः क्षीरसागरे ।**

**स्वर्ग लक्ष्मीरिन्द्रगेहे राजलक्ष्मीर्नृपालये ॥**

देवी ! हजूर बैकुण्ठमा महालक्ष्मी, क्षीर समुद्रमा लक्ष्मी, राजभवनमा राज्यलक्ष्मी र इन्द्रको स्वर्गमा स्वर्गलक्ष्मी हुनुहुन्छ ।

**गृह लक्ष्मीश्च गृहिणां गेहे च गृहदेवता ।**

**सुरभ्नि सागरे जाता दक्षिणा यज्ञकामिनी ॥**

हे देवी ! हजूर गृहस्थको घरमा गृहलक्ष्मी एवं गृह देवता, सागरमा सुरभि तथा यज्ञमा दक्षिणाको रूपमा विराजमान हुनुहुन्छ ।

**अदिति र्देवमाता त्वं कमला कमलालया ।**

**स्वाहा त्वं च हविर्दाने कव्यदाने स्वधास्मृता ॥**

हजूर नै देवताहरूकी माता अदिति हुनुहुन्छ । हजूरलाई कमला र कमलालया भनेर पनि पुकारिन्छ । हवनको समयमा हव्य प्रदान गर्दा 'स्वाहा' अनि पितृकार्यमा कव्य प्रदान गर्ने समयमा 'स्वधा' को उच्चारण हुन्छ, त्यो हजूरकै नाम हो ।

**त्वं हि विष्णुस्वरूपा च सर्वाधारा वसुन्धरा ।**

**शुद्धसत्त्वस्वरूपा त्वं नारायणपरायणा ॥**

सबैलाई धारण गर्नुहुने विष्णुमयी पृथ्वी हजूर नै हुनुहुन्छ । भगवान् नारायणको उपासनामा सदा तत्पर रहनुहुने देवी ! हजूरको सत्यमय विग्रह परम शुद्ध छ ।

**क्रोध हिंसावर्जिता च वरदा शारदा शुभा ।**

**परमार्थप्रदा त्वं च हरिदास्यप्रदा परा ॥**

हजूरमा क्रोध र हिंसाको लागि किञ्चित मात्र पनि स्थान छैन । हजूरलाई शारदा, शुभा, परमार्थदा एवं हरिदास्यप्रदा पनि भनिन्छ ।

**यया विना जगत्सर्वं भस्मी भूतमसारकम् ।**

**जीवन्मृतं च विश्वं च शश्वत् सर्व यया बिना ॥**

हजूरको अनुपस्थितिमा सारा जगत् नै निस्तब्ध भएर भस्मीभूत हुनजान्छ । हजूर नरहनुहुँदा सारा विश्वको प्राण भएर पनि मृतकको जस्तो स्थिति हुनजान्छ ।

**सर्वेषां च परा माता सर्वबान्धवरूपिणी ।**

**धर्मार्थकाममोक्षाणां त्वं च कारणरूपिणी ॥**

हजूर सम्पूर्ण प्राणीहरूकी श्रेष्ठ माता हुनुहुन्छ । सबैको बान्धवरूपमा हजूरकै आगमन भएको छ । हजूरकै कृपाले धर्म, अर्थ, काम र मोक्ष प्राप्त हुन्छ ।

**यथा माता स्तनन्धानां शिशुनां शैशव सदा ।**

**तथा त्वं सर्वदा माता सर्वेषां सर्वरूपतः ॥**

जसरी सानो बालकलाई दूध प्रदान गर्ने उसकी आमा हुन्छिन्, त्यसरी नै हजूर जगत्कै जननी भएर सबैका सबै अभिलाषाहरू पूर्ण गर्ने गर्नुहुन्छ ।

**मातृहीनः स्तनन्धस्तु सच जीवति दैवतः ॥**

**त्वया हीनो जनः कोऽपि न जीवत्येव निश्चितम् ।**

स्तनपान गर्ने बालक आमा नरहे पनि भाग्यवश बाँच्न त सक्ला तर हजूरबिना त कोही पनि बँच्न सक्दै सक्दैन, यो निश्चित छ ।

**सुप्रसन्नस्वरूपा त्वं मां प्रसन्ना भवाम्बिके ।**

**वैरिग्रस्तं विषयं देहि मह्यं सनातनि ॥**

हे अम्बे ! सदा प्रसन्न रहनु हजूरको स्वाभाविक गुण हो । त्यसैले हजूर मदेखि पनि प्रसन्न भइदिनुहोस् । मेरो राज्य शत्रुहरूले हातमा लिएका छन्, हजूरकै कृपाले उक्त राज्य मलाई पुनः प्राप्त होस् ।

**अहं यावत् त्वया हीनो वन्धुहीनश्च भिक्षुकः ।**

**सर्व सम्पद्‌विहीनश्च तावदेव हरि प्रिये ॥**

हे हरिप्रिया ! जबसम्म हजूरको दर्शन भएको थिएन, तबसम्म म बन्धुहीन, भिक्षुक तथा सबै सम्पत्तिले शून्य भएको थिएँ ।

**ज्ञानं देहि च धर्मं च सर्वसौभाग्यभीप्सितम् ।**

**प्रभावं च प्रतापं च सर्वाधिकार मेव च ।**

**यं पराक्रमं युद्धे परमैश्वर्यमेव च ॥**

हे मातेश्वरी ! अब त मलाई ज्ञान, धर्म, सम्पूर्ण इच्छा, सौभाग्य, प्रभाव, प्रताप, सर्वाधिकार, परम ऐश्वर्य, पराक्रम तथा युद्धमा विजय प्राप्त हुनु नै पर्दछ ।

यसको तात्पर्य यो हो कि जुन स्तुतिबाट इन्द्रादि देवताहरूले भगवती महालक्ष्मीको स्तुति गरेर सबै कुरा प्राप्त गरे, त्यो स्तुतिले निश्चय नै तपाईं हामी सबैलाई अभीष्ट सिद्धि, अपार वैभव, सुख र ऐश्वर्य प्रदान गर्दछ । यस्तो रहस्यलाई बुझेर पूर्ण भक्ति-भावले भगवती महालक्ष्मीको आराधना गरौं ।

जय गुरुदेव !

**लक्ष्मी वदैव वदितं सदैव**
**पूर्णो वतां वं परिपूर्ण रूपं**
**आगच्छ मां भवतु वै परमं प्रसादं**
**ज्ञानं विचै क्षण वतां परमं च दिव्यं**

"विश्वामित्र संहिता"मा महर्षि विश्वामित्र आफ्नो ओजस्वी वाणीले अत्यन्तै नम्र स्वरमा भगवती लक्ष्मीको प्रार्थना गर्दै, चिन्तन गर्दै, नमन गरेर भन्नहुन्छ–

यसमा कुनै शंका छैन कि जुन विशिष्ट प्रयोगलाई प्रारम्भ गरिरहेको छु, यसलाई मैले ऊर्ध्वचेता ज्ञानबाट प्राप्त गरेको हुँ । यसैले यस कुरामा त कुनै शंका छैन कि तपाईँलाई आफ्नो अष्टस्वरूपमा मेरो घरमा स्थापित हुनु नै छ । तर मेरो प्रार्थना यो हो कि सबै प्रकारको सम्पन्नता प्राप्त भएपछि ममा अहं भाव नआओस्, ममा कुमार्गमा हिँड्ने भावना उत्पन्न नहोस्, मैले सही कार्यहरुमा त्यस धनलाई सदुपयोग गरूँ र जीवनमा यश, सम्मान, प्रसिद्धि र पूर्वजहरुको गौरवलाई उचाइतिर अग्रसर गर्न सकूँ । हे भगवती लक्ष्मी ! म यस्तै आशीर्वाद चाहन्छु ।

म पनि आफ्ना शिष्यहरुलाई यही आशीर्वाद प्रदान गर्दछु कि उनीहरुलाई जीवनमा पूर्णता एवं दिव्यता प्राप्त होस् ।

विश्वामित्रले तन्त्र र मन्त्रद्वारा जीवनमा उच्चता एवं श्रेष्ठता प्राप्त गरे । तन्त्रको यो तात्पर्य होइन कि तपाईँ नाङ्गो रहनुहोस्, अथवा खप्परको माला पहिरिनुहोस्, अथवा मसानमा बस्नुहोस् वा भस्म दलेर शरीरलाई छोप्नुहोस् अथवा रक्सी-चुरोट खानुहोस्, तन्त्रको अर्थ यो हुँदै होइन । मेरो पूरा तान्त्रिक जीवनमा मैले त कहिले पनि कुनै नशा लिइन ।

तन्त्रको तात्पर्य यो हो कि अत्यन्तै व्यवस्थित तरीकाले कार्य सम्पन्न होस् । सिस्टम्याटिक होस् । हामी प्रजातन्त्रमा छौँ– यो पनि तन्त्र हो । जब प्रजाको राज्य सुचारुरूपले चल्छ भने त्यसलाई प्रजातन्त्र भनिन्छ । यदि राजाको राज्य सुचारुरूपले चल्छ भने त्यसलाई राजतन्त्र भनिन्छ । हामीले सही तरीकाले लक्ष्मीलाई प्राप्त गर्छौं भने त्यसलाई लक्ष्मी तन्त्र भनिन्छ । महर्षि विश्वामित्रले ऊर्ध्वचेता रूपले लक्ष्मी तन्त्रको निर्माण गरे र अद्वितीय, सम्पन्न बन्न सके ।

ऊर्ध्वचेताको अर्थ हो– मनुष्यले त्यस आध्यात्मिक उच्चतालाई प्राप्त गर्न सकोस् जसलाई पूर्णमदः पूर्णमिदं भनिएको छ । मनुष्यको

# मसानघाटको यात्रा गर्ने कि अमर बन्ने ?

तात्पर्य हो कि ऊ मसानघाटमा हरेक पाइला बढाइरहेको छ । जब जन्मन्छ मानिसको पहिलो पाइला मृत्युतर्फ बढ्दछ। उसको आयु चौसठ्ठी वर्ष तेइस दिन छ भने जन्मको दोस्रो दिन चौसठ्ठी वर्ष बाइस दिन बाँकी हुन्छ र विस्तारै-विस्तारै त्यो एक-एक इन्च मृत्युतर्फ अग्रसर हुन्छ । यसलाई मनुष्य भनिन्छ ।

तर यो जीवन होइन । मसानतर्फ जानेलाई जीवन भनिँदैन । जो जन्मछ त्यो मृत्युलाई प्राप्त हुन्छ नै। तर यो जरुरी छैन। मलाई अत्यन्तै राम्रोसँग ज्ञात छ कि वशिष्ठ अहिले मरेका छैनन् किनकि उनको नाम तपाईं र मलाई याद छ । उनको छोराको नाम मलाई याद छैन, तपाईंलाई पनि छैन होला । विश्वामित्र अझै मरेका छैनन्, अत्रि मरेका छैनन्, कणाद, पुलस्त्य, शंकराचार्य, भगवान् बुद्ध, महावीर स्वामी मरेका छैनन्, विशुद्धानन्द समाप्त भएका छैनन् ।

उनीहरु सबै जीवित नै छन्। जीवितको तात्पर्य हो कि जसको कीर्ति जीवित रहन्छ, जसको यश जीवित रहन्छ। जीवित कहिले रहन्छ ? तब जब जीवनको बाटोमा हिँड्दाहिँड्दै सद्गुरु प्राप्त हुन्छ ।

तर यसमा दुईवटा स्थिति हुन्छ– या त तिमी गुरुको समीप भएर निस्क । उहाँलाई तिमीले चिन्नै सक्दैनौ किनकि तिमीसँग त्यो दृष्टि नै छैन। त्यसैले तिमी त गुरु समीपबाट निस्केर मसानमा पुग्न सक्छौ। तिम्रा बुबासँग पनि यही घटना घटेको थियो । उहाँको जीवनमा अवश्यै कुनै सद्गुरु भेटिएको थियो होला। यो हुनै सक्दैन कि सद्गुरुसँग भेटेको नहोस्। बरु यो सम्भव छ कि उहाँले ठम्याउन सक्नु भएन, उहाँ सद्गुरुको नजिकैबाट निस्कनुभयो र मसानघाटमा गएर सुत्नुभयो। तिम्रा हजूरबुबासँग पनि यही घटना घट्यो, तिम्रा जिजुबुबासँग पनि यही भयो र तिमीसँग पनि यो घटना घट्न सक्छ ।

यदि बीचमा कुनै सद्गुरु प्राप्त भएमा उहाँको चरण समात्नुपर्दछ। मैले शब्द प्रयोग गरेको छु– 'सद्गुरु', 'गुरु' होइन । गुरुले त

**तिमी र मेरो बीच गुरु शिष्यको जुन सम्बन्ध छ, यो तिमीले चाहँदैमा हटाउन सक्दैनौ र म प्रत्येक जीवनमा तिमीसँग भेट्छु, यसमा दुईमत छैन । पूर्ण सोह्र कलालाई महसुस गर्ने व्यक्तिले अगाडिको आफ्नो जीवनलाई देख्न सक्छ । त्यसभन्दा अघिको जीवनलाई पनि देख्न सक्छ । म देख्न सक्छु । जब देख्न सक्छु भने तिमीलाई चिन्न पनि सक्छु । म एक-एक शिष्यलाई राम्रोसँग चिन्दछु । म त्यति राम्रोसँग तिमीलाई चिन्न सक्छु जति तिमी आफैले आफैलाई चिन्न सक्दैनौ र हरेक जन्ममा मैले तिमीलाई यस मोडमा उभ्याएको छु, तर तिमीले हरेकपटक आफ्नो हातलाई फुकाउँछौ ।**

छल पनि गर्न सक्छ, पाखण्ड पनि गर्न सक्छ, ढोंग पनि गर्न सक्छ । यस्तो गुरु तिमीलाई प्रत्येक गल्लीमा भेटिन सक्छ ।

विश्वामित्रले अत्यन्तै गहिरो कुरा बताउनुभएको छ कि यदि सद्गुरु प्राप्त हुँदा हामीले उहाँको चरण समात्यौँ भने उहाँले हामीलाई जीवनको दोस्रो मोडमा ल्याएर उभ्याउनुहुन्छ । यदि त्यो मोडलाई छोड्यौँ भने हामी मसानतर्फ जानेछौं । जुन दोस्रो मोड छ त्यो मृत्युबाट अमृत्युतर्फ जाने मोड हुनेछ । त्यस मोडको तिमीलाई ज्ञान छैन किनकि यसको ज्ञान त तिम्रा बुवालाई पनि थिएन । त्यसैले उहाँले तिमीलाई यस ज्ञानलाई दिन पाउनुभएन । उहाँसँग जे थियो त्यही दिनुभयो । उहाँलाई त सन्तान कसरी जन्माउने भन्ने ज्ञान थियो, उहाँलाई पसल चलाउने तरीका थाहा थियो, उहाँलाई कसरी डण्डाले पिट्ने, कसरी झूटो बोल्ने, कसरी चुरोट पिउने भन्ने थाहा थियो । उहाँलाई जे थाहा थियो, उहाँले त्यही सिकाउनुभयो । सद्गुरुको ज्ञान उहाँलाई थिएन, त्यसैले बताउन सक्नुभएन ।

आज तिमीले प्रयत्न गर्छौ भने पनि तिम्रो बुबाले सोच्नुहुनेछ– यो मान्छे बिग्रियो । माला जपेर, माला लगाएर भोकै मर्ने हो कि क्या हो भनेर उहाँले तिमीलाई गाली गर्नुहुनेछ । उहाँले सत्य भनिरहनु भएको छ किनकि उहाँ आफ्नो मोडमा हिँडिरहनु भएको छ । तर म बताइरहेको छु कि यो मोड गलत छ । यस मोडले तिमीलाई सीधा मसानतिर पुऱ्याउनेछ आजभन्दा बीस, पचास वर्षपछि । मसानमा गएर सुतेपछि ओढाएको कात्रोलाई पनि उतारिनेछ । कात्रोलाई पनि साथै लान दिइने छैन । यस्तो बाटोमा हिँड्नाले कुनै आनन्द पाइँदैन । जहाँ सद्गुरु प्राप्त हुन्छ, बुझे हुन्छ भाग्य खुल्यो । पहिले यसलाई सम्झ, फेरि उहाँको पाउ समात, कसेर समात किनकि उहाँले आफ्नो पाउलाई छोडाउन सक्नुहुन्छ । यसकारण छोडाउन सक्नुहुन्छ कि उहाँले धेरै माया फैलाउनु हुन्छ, अत्यन्तै सम्मोहन गर्नुहुन्छ, धेरै भ्रमित पार्नुहुन्छ र आफैलाई लुकाउनुहुन्छ । उहाँले सबैलाई साथै राख्न त सक्नुहुन्न ।

तिमीलाई आश्चर्य लाग्न सक्ला कि गुरुलाई के भयो, यत्तिका सिद्धिहरु छन् तर पनि बिरामी रहनुहुन्छ । यो कस्तो गुरुज्यू हुनुहुन्छ ? हाम्रो बुद्धिले फेरि हामीलाई भ्रमित पार्छ । त्यसले तिम्रो हातलाई सद्गुरुबाट छुटाउने कोशिश गर्ला र सद्गुरुको हात छोडेमा त तिम्रो मोड मसानतिर नै हुनेछ । म तिमीलाई बदलिरहेको छु । एउटा दोस्रो मोडमा उभिँदा यदि हाम्रा शास्त्र प्रमाण हुन् भने हामी मृत्युबाट अमृत्युतर्फ बढ्न सक्दछौँ । शास्त्रले मृत्युतर्फ बढ्न भनेको छैन ।

सैकडौँ मानिसहरु मृत्युबाट अमृत्युतर्फ बढ्न सकेका छन् । यस बाटोमा त एउटा पन्ध्र वर्षको बालक पनि बढ्न सक्छ र अस्सी वर्षको बूढो पनि बढ्न सक्छ । यसका लागि उमेर कुनै बाधक छैन ।

तिमी र मेरो बीच गुरु शिष्यको जुन सम्बन्ध छ, यो तिमीले चाहँदैमा हटाउन सक्दैनौ र म प्रत्येक जीवनमा तिमीसँग भेट्छु, यसमा दुईमत छैन । पूर्ण सोह्र कलालाई महसुस गर्ने व्यक्तिले अगाडिको आफ्नो जीवनलाई देख्न सक्छ । त्यसभन्दा अघिको जीवनलाई पनि देख्न सक्छ । म देख्न सक्छु । जब देख्न सक्छु भने तिमीलाई चिन्न पनि सक्छु । म एक-एक शिष्यलाई राम्रोसँग चिन्दछु । म त्यति राम्रोसँग तिमीलाई चिन्न सक्छु जति तिमी आफैले आफैलाई चिन्न सक्दैनौ र हरेक जन्ममा मैले तिमीलाई यस मोडमा उभ्याएको छु, तर तिमीले हरेकपटक आफ्नो हातलाई फुकाउँछौ ।

मसँग तिम्रो पच्चीस जीवनको लेखाजोखा छ । म कुनै गफ हाँकिरहेको छुइनँ । यसो भन्नुमा मेरो कुनै स्वार्थ छैन । मैले तिमीलाई हरेकपटक बोलाएको छु, हरेकपटक त्यस मोडमा उभ्याउने कोशिश गरेको छु । तर प्रत्येकपटक तिम्रा शत्रुहरुले तिमीलाई अर्कै मोडमा हुत्याउँछन् । ती शत्रुहरु कहिले आमाको रूपमा, कहिले बुबाको रूपमा, कहिले लोग्ने, कहिले छोरा, कहिले रोग त कहिले बुद्धिको रूपमा आउँछन् । ती शत्रुहरु आएर तिम्रो हात मबाट छुटाएर मसानतिर लिएर जान्छन् । तिमी गलत बाटोमा हिँडेकाले म बोलाउँछु, त्यस बाटोमा हिँड्नाले कुनै पूर्णता प्राप्त हुँदैन । म जुन बाटोमा हिँडिरहेको छु, त्यो मैले देखेको बाटो हो । जुन बाटोमा तिमी हिँडिरहेका छौ, त्यसमा तिम्रा पूर्वज हिँड्नुभयो र केही पनि प्राप्त गर्नुभएन ।

यसको प्रमाण यो कि तिमीलाई आफ्ना हजूरबुबाको नाम याद छ तर जिजुबुबाको नाम थाहा छैन । दुई-चार जनाले आफ्ना जिजुबुबाको नाम बताउन सक्लान् तर एकजना पनि त्यस्तो व्यक्ति छैन जसले जिजुबुबाको पनि बुबाको नाम बताउन सकोस् । यसको अर्थ यो हो कि अगाडिको सय वर्ष अघिका व्यक्तिहरुलाई हामीले बिर्सियौँ । तिमीलाई पनि यसप्रकार बिर्सिदिनेछन् ।

यदि यसलाई तिमी सही जीवन ठान्दछौ भने तिमी सही बाटोमा छौ, तिमीलाई मेरो बाटोमा आउने कुनै जरुरत छैन । यसबाट तिम्रो समय मात्र बर्बाद होला, यसबाट केही लाभ हुने छैन ।

तर जुन बाटोमा मैले तिमीलाई डोऱ्याइरहेको छु, त्यो समृद्धिको बाटो पनि हो र पूर्णताको बाटो पनि, ऐश्वर्यको बाटो पनि हो र श्रेष्ठताको बाटो पनि । श्रेष्ठताको बाटो यसकारण हो कि त्यस बाटोमा हिँडेर तिमीले हजारौँ, लाखौँ व्यक्तिको कल्याण गर्न सक्छौ । पैसाबाट गर्न सक्दैनौ, धनबाट गर्न सक्दैनौ र तिमीसँग यदि त्यो ज्ञान र चिन्तन छैन भने तिमीले गर्न सक्ने छैनौ ।

त्यसैले तिमी जीवनमा त्यस मोडमा बढ्न सक, तिमीले गुरुलाई र स्वयंलाई चिन्न सक, जीवनमा विजय एवं सफलता प्राप्त गर्न सक, साधनात्मक बल र मन्त्र शक्ति प्राप्त गर्न सक– म हृदयदेखि नै आशीर्वाद दिन्छु ।

**–परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज**

# यसपालिको लक्ष्मीपूजामा तपाईं पनि स्फटिक श्रीयंत्र आफ्नो घरमा राखेर हेर्नुस्...........

ईश्वरले कुनै पनि प्राणीलाई भेदभाव गरेका हुँदैनन् तैपनि हामी देख्छौं कोही व्यक्ति शहरमा महल ठड्याएर आनन्दसँग जीवनयापन गरिरहेका छन् भने कैयौं त्यस्ता व्यक्ति पनि छन् जसलाई दिनभरि मेहनत गरेर पनि बेलुकाको छाक टार्न मुस्किल परिरहेको हुन्छ । उसको जीवनमा भाग्य भनेर लेखिएको नै हुँदैन । मान, सम्मान र ऐश्वर्य भनेको त सपनामा पनि सोच्न नसक्ने अवस्थाका व्यक्तिहरू पनि थुप्रै छन् ।

के भाग्यले उनीहरूलाई ठगेकै हो त ? के ईश्वरले उनीहरूलाई नहेरेकै हो त ? जति मेहनत गरे पनि आफ्नो तन, मन, बुद्धि, विवेक उन्नति प्रगतिको लागि खर्च गरे पनि अवनति नै हात लाग्नु । अर्कोतर्फ सामान्य मेहनतको भरमा पनि उन्नतिको शिखरमा कैयौं व्यक्तित्वहरू पुगेको पाउँदछौं । आखिर कसलाई मन हुँदैन उन्नतिको शिखरमा पुग्ने, मान सम्मान र ऐश्वर्य प्राप्त गर्ने । खोई त सबै त्यो अवस्थामा पुगेको ? के कारण छ जति प्रयास प्रयत्न गर्दा पनि उन्नति प्रगति गर्न नसक्नुमा ? यसमाथि विश्लेषण गर्दा यस्तो पनि पाइन्छ कि कैयौं व्यक्तिहरूको जन्म जन्मान्तरको न्यूनताको कारण उनीहरूको जीवनमा सौभाग्य भन्ने नै हराइसकेको हुन्छ । जब भाग्य नै हुँदैन, केवल प्रयास प्रयत्नले मात्रै केही जोर चल्दैन । यदि यस्तै हुँदो हो त ती भारी बोक्ने भरिया दाजुहरूले जति कार्य गर्ने अरू को नै होलान् र ? उदाहरणहरू त तपाईं हामीनजिक प्रशस्तै छन् ।

के त्यसो भए दुर्भाग्यलाई पनि सौभाग्यमा बदल्न सकिन्न र ? अवश्य सकिन्छ ! शास्त्रमा त्यस्ता गूढ ज्ञानहरू रहेका छन्, त्यस्ता विशिष्ट विधिविधान एवं सामग्रीहरू बताइएका छन् जसको माध्यमबाट हामीले दुर्भाग्यशाली जीवन त्यागेर सौभाग्यपूर्ण जीवन बिताउन सक्छौं । तर त्यस विषयमा ज्ञान नहुनु आजको मानवको दुर्भाग्य नै हो ।

मानव लोकबाट रुष्ट भएर कहिल्यै मानव लोकमा नफर्कने अठोट गरेकी माता महालक्ष्मीलाई विश्वामित्रले आफ्नो आश्रममा नृत्य गर्न र सदाको लागि बस्न बाध्य बनाउनुभएको दिव्यतम माध्यम श्री यन्त्र नै सम्पूर्ण यन्त्रहरूमध्ये सबैभन्दा प्रभावकारी र महत्त्वपूर्ण यन्त्र हो । आजभोलि यस यन्त्रको व्यापक चर्चा, परिचर्चा र प्रयोग गरिएको पाइन्छ । के बजारमा जताततै पाइने श्री यन्त्रले सोचेजस्तो फल दिन सक्छ त ? यन्त्रले कार्य गर्न त मन्त्र शक्तिद्वारा प्राण-प्रतिष्ठित हुनुपर्दछ, यो नै सबैभन्दा ठूलो कुरा हो । प्राण-प्रतिष्ठित श्री यन्त्रले मात्र पूर्ण कार्य गर्न र मनोवाञ्छित फल दिन सक्षम हुन्छ ।

परमपूज्य सद्गुरुदेवहरूको परम कृपा, एवं आशीर्वादस्वरूप सिद्धाश्रम शक्ति केन्द्रले प्राण-प्रतिष्ठायुक्त पूर्ण सक्षम स्फटिक श्री यन्त्र उपलब्ध गराइरहेको छ। सम्पूर्ण ऋषिमुनि, तपस्वीहरूले एकै स्वरमा यो स्वीकार गरेका छन् कि यो यन्त्र अद्भुत धन प्रदायक यन्त्र हो । अन्य कुनै पनि यन्त्र, साधना वा पूजा अथवा प्रयोगबाट लक्ष्मी प्रसन्न भए पनि वा नभए पनि यदि स्फटिक श्री यन्त्रको स्थापना गरिएको छ भने निश्चय नै माता महालक्ष्मी प्रसन्न हुनुहुन्छ र साधकलाई पूर्ण भौतिक सुख, सफलता र सम्पन्नता प्रदान गर्नुहुन्छ । केवल भारतवर्ष मात्रै नभएर पूरै विश्वमा नै यस यन्त्रको खोज अनुसन्धान भइरहेको छ । पाश्चात्य तन्त्र विशेषज्ञ 'वुडरोफ'ले भनेका छन्- '**जुन दिन श्री यन्त्रको वास्तविक रहस्य उजागर हुनेछ, त्यस दिन विश्वको स्वरूप नै बदलिनेछ ।**' ऋषि कणादका अनुसार यदि सिद्ध प्राण-प्रतिष्ठायुक्त श्री यन्त्र घरमा स्थापित छ भने अन्य कुनै पनि प्रकारको प्रयोगको आवश्यकता पर्दैन किनकि यो यन्त्र स्वयंले चैतन्यता प्रदान गर्दछ । जसरी एउटा अगरबत्ती कुनै व्यक्ति विशेषमा सम्बन्धित हुँदैन, जहाँ बालिन्छ त्यहाँ त्यसले सुगन्ध दिन थाल्दछ, ठीक त्यसैगरी यस प्रकारको प्राण-प्रतिष्ठित स्फटिक श्री यन्त्र जहाँ स्थापित हुन्छ त्यहाँ अनुकूल प्रभाव अवश्य पार्दछ । श्री यन्त्रको बनोट नै त्यस प्रकारको छ कि ब्रह्माण्डमा विचरित त्यस्ता दिव्य शक्तिलाई खिचेर तपाईं हामीसामु त्यसले छरिरहेको हुन्छ ।

श्री यन्त्रको निर्माणको प्रकारमा विशिष्टता रहेको पाइन्छ । त्यसैले यस यन्त्रलाई यन्त्रराज मानिएको छ । चाहे व्यक्तिको भाग्यमा दुर्भाग्य लेखिएको होस्, चाहे विधाताले उसको भाग्यमा दुर्भाग्यै दुर्भाग्य लेखिदिएका हुन्, त्यस लेखाइलाई पनि परिवर्तन गरी सौभाग्यशाली बनाउन श्री यन्त्र सक्षम र सफल हुन्छ । वास्तवमा यस यन्त्रको जति नै चर्चा गरे पनि अधुरो र अपुरो नै हुन्छ । त्यसैले यसको वास्तविक प्रभाव त आफ्नो जीवनमा आउने अनुकूलताबाट हामी केही मात्रामा भए पनि आँकलन गर्न सक्दछौं । श्री यन्त्रको प्रभाव नपर्ने त हुनै सक्दैन तर तपाईंले श्रद्धा, भक्ति र समर्पण भने दिनु जरुरी हुन्छ । श्रद्धा, भक्तिपूर्वक श्री यन्त्र स्थापित गरी नित्य प्रार्थना गरेर हेर्नुहोस् अनि बाँकी जीवन कसरी बित्नेछ, हेर्दै जानुहोस् ।

परमपूज्य सद्गुरुदेवहरूले श्री यन्त्रको वास्तविक रहस्य उजागर गर्दै नेपालमा नै पहिलोपटक गोरक्ष निखिल शक्तिले आपूरित प्राण-प्रतिष्ठायुक्त स्फटिक श्री यन्त्र सिद्धाश्रम शक्ति केन्द्रको माध्यमबाट प्रदान गरिदिनुभएको छ । गंगा नदी तपाईं हाम्रो नजिक बहेकी छिन्, किनारमा बसेर प्यासले छट्पटिनुहुन्छ भने त्यसमा गंगाको के दोष ? नदीको पानी पिएर आफूलाई तृप्त गर्ने अथवा नदीले बगाउने पो हो कि भनी डराएर किनारमा नै बसेर तड्पिने ? तपाईंहरूकै हातमा छ । जय गुरुदेव !

## गुरूको भक्ति

मुटुको धड्कन हौ तिमी, हे मेरा गुरुदेव ।
दर्शन देऊ सामु आई, मलाई एकखेप ॥
पाएथैं मैले जुन दिन तिमीलाई, पाएथैं सब खुशी ।
तिम्रो भक्तिमा डुब्नेछु, म बनेर एक दासी ॥

एकफेर तिम्ले मलाई हेर्दा संसार भुल्दछु ।
तिम्रो कृपा नपाए म पलपल जल्दछु ॥
साथ देऊ हे गुरु मलाई सधैंको निम्ति ।
छाडी गए तिमीले मलाई हुनेछु अभागी ॥

ध्यान र साधना सिकाई, जीवन पार लगाइदेऊ ।
माया र मोहको जाललाई हटाई, नयन खुलाइदेऊ ॥
नाम तिम्रो ओठमा राख्देऊ, तस्वीर मुटुमा खोप्देऊ ।
तिम्लाई चढाउने हजार फूलमा तिमी एउटा चुन्देऊ ॥

गुरु गोरख, गुरु निखिल मेरा दुई आँखाका नानी ।
तिम्रो महिमा गाउनेछु म जानी र नजानी ॥
चरण तिम्रो सधैंभरि शिरमा राख्न पाइराखूँ ।
तिम्रै शरणमा सयौं जुनी बिताउन पाइराखूँ ॥

**–चेतना गुरागाई, कालोपुल, काठमाडौं ।**

### कार्तिक महिनाका चाडपर्व

| | |
|---|---|
| कार्तिक ४ गते | **श्री शिव गोरक्ष हवन** |
| कार्तिक ५ गते | **दिव्य गुरु महोत्सव, तान्त्रोक्त वटुक भैरव हवन**, अष्टमीव्रत गोरखकाली पूजा |
| कार्तिक ६ गते | **तान्त्रोक्त महालक्ष्मी हवन** |
| कार्तिक ७ गते | **तान्त्रोक्त वगलामुखी हवन** |
| कार्तिक ८ गते | रमाएकादशी व्रत |
| कार्तिक १० गते | धन्वन्तरी जयन्ती, यमपञ्चक प्रारम्भ, काग तिहार, प्रदोष व्रत |
| कार्तिक ११ गते | नरकचतुर्दशी, कुकुर तिहार |
| कार्तिक १२ गते | लक्ष्मीपूजा, दीपावली |
| कार्तिक १३ गते | गाई/गोरु तिहार, गोबर्धन पूजा |
| कार्तिक १४ गते | यमद्वितीया, भाइपूजा |
| कार्तिक १९ गते | छठ पर्व |
| कार्तिक २१ गते | अष्टमीव्रत, गोरखकाली पूजा |
| कार्तिक २४ गते | हरिबोधनी एकादशी व्रत, तुलसी विवाह |
| कार्तिक २५ गते | प्रदोष व्रत |
| कार्तिक २६ गते | वैकुण्ठचतुर्दशी व्रत |
| कार्तिक २८ गते | कार्तिक स्नान समाप्त, गुरु नानक जयन्ती |

**प्रत्येक बृहस्पतिबार बिहान १०:०० बजे–गुरु पूजन**
**प्रत्येक दिन साँझ ५:०० बजे–आरती**





## आश्रममा उपलब्ध सेवाहरू

- योग, ध्यान, हिप्नोटिज्म, आदि बारे अध्ययन, अनुसन्धान एवं परामर्श सेवा ।
- मन्त्र शक्तिद्वारा हाम्रो दैनिक जीवनमा आइपर्ने विविध समस्याहरूको समाधान ।
- फोटो थेरापीको माध्यमबाट असाध्य रोगहरूको उपचार ।
- मन्त्र तन्त्रको माध्यमबाट साधनामा अघि बढ्न चाहने साधक साधिकाहरूलाई विशेष मार्गनिर्देशन ।
- पूर्ण प्रामाणिकरूपमा विशेष प्रक्रियाद्वारा प्राण-प्रतिष्ठित यन्त्र, माला, आसनलगायत साधनाका लागि आवश्यक सम्पूर्ण सामग्रीहरूको व्यवस्था ।
- परमपूज्य सद्गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको बारेमा अध्ययन अनुसन्धान एवं जानकारी चाहनेहरूका लागि गोरक्ष निखिल पुस्तकालयको व्यवस्था ।
- विभिन्न किसिमका रोगहरूको उपचारका लागि विशेष तान्त्रिक हिलिङ्को व्यवस्था ।

# आफ्नो क्षमताको पहिचान गरौं र देश निर्माणको लागि यसको उपयोग गरौं ।

नेपाल सरकार

**सूचना तथा सञ्चार मन्त्रालय**

सूचना विभाग

## मन्त्र तन्त्र यन्त्र विज्ञानसम्बन्धी नेपालकै पहिलो रेडियो कार्यक्रम

# गोरक्ष निखिल सन्देश

gnsandesh@ssk.org.np

| स्थान | समय | स्टेशन | मेगाहर्ज |
|---|---|---|---|
| काठमाडौं | सोमबार बिहान ७:००–८:०० | रेडियो सिटी एफ एम | ९८.८ |
| पोखरा | सोमबार बिहान ५:०५–५:४५ | माछापुच्छ्रे एफ एम | ९१ |
| चितवन | सोमबार बिहान ५:००–५:४० | कालिका एफ एम | ९५.२ |
| बनेपा | सोमबार बिहान ६:००–६:३० | मध्यपूर्व एफ एम | १०४ |
| सुर्खेत | सोमबार बिहान ५:१५–५:४५ | रेडियो भेरी एफ एम | ९८.६ |
| प्युठान | सोमबार बिहान ५:३०–६:०० | माण्डवी एफ एम | ९७ |
| गोरखा | सोमबार बिहान ५:३०–६:०० | रेडियो गोरखा एफ एम | ९२.८ |
| भैरहवा | बिहीबार बिहान ५:००–५:४५ | रूपन्देही एफ एम | १०२ |
| दाङ घोराही | बिहीबार बिहान ५:३०–६:०० | रेडियो मध्यपश्चिम एफ एम | ९१.४ |
| पाल्पा | बिहीबार बिहान ५:००–५:३० | रेडियो मुक्तिनाथ एफ एम | ९०.८ |
| सिन्धुली | बिहीबार बिहान ५:००–५:३० | सिन्धुलीगढी एफ एम | १०३.६ |
| दाङ लमही | शुक्रबार बिहान ५:३०–६:०० | रेडियो देउखुरी एफ एम | १०५.८ |
| पोखरा | बिहीबार बिहान ५:३०–६:०० | रेडियो सराङ्कोट एफ एम | १०४.६ |
| दमौली | बिहीबार बिहान ५:२५–५:५५ | दमौली एफ एम | ९४.२ |
| कोहलपुर | बिहीबार बिहान ५:३०–६:०० | कोहलपुर एफ एम | १००.२ |
| सल्यान | बिहीबार बिहान ५:००–५:३० | रेडियो सल्यान एफ एम | १०१ |

समयको दुष्प्रभाव भनौं वा हाम्रो दुर्भाग्य, अन्य पर्वहरूजस्तै गरी दीपावली पर्वलाई पनि हामीले आमोद-प्रमोदमा नै सीमित राखी मनाइरहेका हुन्छौं । माता महालक्ष्मीसँग सम्बन्धित आध्यात्मिक गतिविधिका साथ मनाई माता महालक्ष्मीलाई आफ्नो घरमा भित्र्याएर वर्षभरि नै आर्थिक, सामाजिक र आध्यात्मिक अभाव हुन नदिन र घरघरमा सुख, शान्ति, ऐश्वर्य प्राप्त होस् भनी हाम्रा प्राचीन ऋषिमुनिहरूले यस परम्पराको थालनी गरिदिनुभएको हो । तर हाम्रो समाज दीपावलीमा केवल राम्रो लगाउने, मिठो खाने, रमाइलो गर्नेमा मात्रै सीमित हुन पुगेको छ । यस्तो सीमितताबाट माथि उठ्दै यसपटकको दीपावली पर्वलाई हामीले पूर्ण सदुपयोग गरौं । त्यसैले जुवातासमा नअल्मलिई माता महालक्ष्मीको कृपा, आशीर्वाद प्राप्त गरी आध्यात्मिक एवं भौतिक उन्नति प्रगतिको मार्ग खोलौं । यसैको लागि माता महालक्ष्मीसँग सम्बन्धित दीपावली पूजन यहाँ प्रस्तुत गरेका छौं र यसबाट पाठकवर्गले भरपूर लाभ उठाउनुहुनेछ भन्ने आशा राख्दछौं ।

**पूजनको लागि आवश्यक सामग्रीहरू**

कुंकुम, रातो कपडा, पान, सुपारी, ल्वाङ, अलैंची, धूप, दीप, फलफूल, गंगाजल, नैवेद्य, वस्त्र, आभूषण, अबीर, सिन्दूर, बेसार, काँचो नरिवल (पानी भएको), फूल, माला, यज्ञोपवीत, पंचामृत, प्राण-प्रतिष्ठित महालक्ष्मी चित्र, महालक्ष्मी यंत्र, कमलगट्टा माला ।

**विधि**

सबैभन्दा पहिले शुद्ध पवित्र भई माथि उल्लिखित सामग्रीहरू जम्मा गर्नुहोस् । त्यसपछि सायंकालमा पूर्व वा उत्तरतर्फ फर्की पहेँलो आसनमा बस्नुहोस् । सम्भव भएसम्म परिवारका अन्य सदस्यहरूलाई पनि साथमा राख्नुहोस् । आफ्नो अगाडि पूजास्थल बनाई त्यसमा पहेँलो आसन ओछ्याएर एउटा थालीमा कुंकुमले स्वस्तिक चिह्न वा श्रीं बीज लेख्नुहोस् । त्यसमाथि महालक्ष्मी यंत्र स्थापित गरिदिनुहोस् र माता महालक्ष्मीको तस्वीर पनि अगाडि स्थापना गर्नुहोस् । सबैभन्दा पहिला गुरु पूजन र गणपति पूजन सम्पन्न गर्नुहोस् । त्यसपछि दाहिने हातमा जल लिएर संकल्प गर्नुहोस् । संकल्पमा मास (महिना), पक्ष, तिथि, आफ्नो नाम तथा गोत्र उच्चारण गरी म अखण्ड लक्ष्मी प्राप्तिहेतु महालक्ष्मी पूजन गर्दैछु भनी जल भूमिमा छोडिदिनुहोस् ।

**कलश स्थापना**

अब आफ्नो दाहिनेतर्फ अक्षताले अष्टदल वा स्वस्तिक चिह्न बनाएर जल भरिएको कलश स्थापित गर्नुहोस् । कलशमा सुपारी, अक्षता, दुबो, दक्षिणा, चन्दन र पुष्प चढाउनुहोस् । कलशलाई सवा मिटर रातो वस्त्रले बेरेर त्यसमाथि नरिवल राखिदिनुहोस् । त्यसपछि धूप, दीप, नैवेद्य आदि चढाएर वरुण देवताको साधारण पूजन गर्नुहोस् । यसपछि माता महालक्ष्मीको मुख्य पूजन आरम्भ गर्नुहोस् ।

पूजन

**ध्यानम्–**

कमलको फूलमा असीन माता महालक्ष्मीको ध्यान गर्नुहोस् ।

**पद्मासनां पद्मकरां पद्ममाला विभूषिताम्**
**क्षीर सागर संभूतां हेमवर्ण समप्रभाम् ।**
**क्षीर वर्ण श्वेत वस्त्रं दधानां हरिवल्लभाम्**
**भावेयं भक्तियोगेन भार्गवीं कमलां शुभाम् ।**
**ॐ श्री महालक्ष्म्यै नमः ध्यानं समर्पयामि ।**

**आवाहनम्–**

माता महालक्ष्मीको आवाहन गर्नुहोस् ।

**सर्वमंगल मांगल्ये विष्णुवक्षः स्थलालये**
**आवाहयामि देवि ! त्वां क्षीर सागर सम्भवे**
**ॐ श्री महालक्ष्म्यै नमः आवाहनम् समर्पयामि ।**

**आसनम्–**

आसनको लागि पुष्प चढाउनुहोस् ।

**सदा पद्मांक संस्थाने सर्वाधारे महेश्वरि**
**सर्वतत्त्वमयं दिव्यं आसनं प्रतिगृह्यताम्**
**ॐ श्री महालक्ष्म्यै नमः पादयोः पाद्यम् समर्पयामि ।**

**अर्घ्यम्–**

माता महालक्ष्मीलाई अर्घ्य अर्पण गर्नुहोस् ।

**अघहीनं गृहाणेदम् अर्घ्यम् अष्टांग संयुतम्**
**अम्बाखिलानां जगतामम्बुजासन वन्दिते ।**
**ॐ श्री महालक्ष्म्यै नमः हस्तयोरर्घ्यं समर्पयामि ।**

**आचमनम्–**

आचमनको लागि जल अर्पण गर्नुहोस् ।

**सर्वतीर्थ समानीतं सुगन्धिं निर्मलं जलम् ।**
**आचम्यताम् मया दत्तं गृहीत्त्वा परमेश्वरि ॥**
**ॐ श्री महालक्ष्म्यै नमः आचमनीयम् समर्पयामि ।**

**स्नानम्–**

माता महालक्ष्मीलाई गंगाजलले स्नान गराउनुहोस् ।

**गंगासरस्वती रेवा पयोष्णि नर्मदाजलैः ।**
**स्नापितासि मया देवि ! तथा शान्तिं कुरुष्व मे ॥**
**ॐ श्री महालक्ष्म्यै नमः स्नानं समर्पयामि ।**

**पंचामृत स्नानम्–**

माता महालक्ष्मीलाई पञ्चामृत (दूध, दही, घ्यू, मह, चिनी) ले स्नान गराउनुहोस् ।

**मध्वाज्यशर्करायुक्त दधिक्षीर समन्वितम्**
**पंचामृतं गृहाणेदं सर्वशक्तिसमन्विते ॥**
**ॐ श्री महालक्ष्म्यै नमः शुद्ध जल स्नानं समर्पयामि ।**

पुनः शुद्ध जलले स्नान गराउनुहोस् ।

**वस्त्रम्–**

मातालाई वस्त्र अर्पण गर्नुहोस् ।

**सर्वभूषादिके सौम्ये लोकलज्जा निवारणे ।**

**मयोपपादिते तुभ्यम् गृह्यताम् जगदम्बिके ॥**
**ॐ श्री महालक्ष्म्यै नमः वस्त्रोपवस्त्रं समर्पयामि ।**

**यज्ञोपवीतम्–**

अब जनै अर्पण गर्नुहोस् ।

**उपवीतं गृहाणेदं उपमाशून्य वैभवे ।**
**उमाहेमवति प्रीत्या हेमसूत्र समन्वितम् ॥**
**ॐ श्री महालक्ष्म्यै नमः यज्ञोपवीतं समर्पयामि ।**

**आभूषणम्–**

मातालाई आभूषण अर्पण गर्नुहोस् ।

**मांगल्यमणिसंयुक्तं मुक्ताफल समन्वितम् ।**
**दत्तं मंगल सूत्रं ते गृहाणाम्ब ! शुभं कुरु ॥**
**ॐ श्री महालक्ष्म्यै नमः आभूषणं समर्पयामि ।**

**चन्दनम्–**

यसपश्चात् चन्दन अर्पण गर्नुहोस् ।

**श्री खण्डचन्दनं दिव्यं गन्धाढ्यं सुमनोहरम् ।**
**विलेपनं सुरश्रेष्ठि चन्दनं प्रतिगृह्यताम् ॥**
**ॐ श्री महालक्ष्म्यै नमः चन्दनं समर्पयामि ।**

**अक्षत्–**

अब अक्षता अर्पण गर्नुहोस् ।

**अक्षतान् धवलान् देवि ! शालीयांस्तण्डुलान् शुभान् ।**
**हरिद्राकुंकुमोपेतान् गृहाणाम्ब ! कृपानिधे ॥**
**ॐ श्री महालक्ष्म्यै नमः अक्षतान् समर्पयामि ।**

**पुष्प–**

यसपछि फूल अर्पण गर्नुहोस् ।

**माल्यादीनि सुगन्धीनि मालत्यादीनि वै विभे ।**
**मयोपनीतानि पुष्पाणि गृहाण जगदम्बिके ॥**
**ॐ श्री महालक्ष्म्यै नमः पुष्पाणि समर्पयामि ।**

**सौभाग्य द्रव्य–**

अब सौभाग्य अर्पण गर्नुहोस् ।

**कज्जलं चैव सिन्दूरं हरिद्राकुंकुमानि च ।**
**भक्त्याऽर्पितानि श्री मातः ! सौभाग्यानि च स्वीकुरु ॥**

**धूपम्–**

यसपश्चात् धूप बालेर अर्पण गर्नुहोस् ।

**वनस्पति रसोद्भूतः गन्धाढ्यः सुमनोहरः ।**
**आघ्रेयः सर्वदेवानां धूपोऽयं प्रतिगृह्यताम् ॥**
**ॐ श्री महालक्ष्म्यै नमः धूपम् आघ्रापयामि ।**

**दीपम्–**

अब दीयो बाल्नुहोस् र माताको चरणमा देखाइदिनुहोस् ।

**साज्यं च वर्तिसंयुक्तम् वह्निना योजितम् मया**
**दीपं गृहाण देवेशि ! सर्वत्र तिमिरापहा ॥**
**ॐ श्री महालक्ष्म्यै नमः दीपं दर्शयामि समर्पयामि ।**

**नैवेद्यम्–**

मातालाई नैवेद्य एवं फलफूल अर्पण गर्नुहोस् ।

**ॐ महालक्ष्म्यै च विद्महे सर्वशक्त्यै च धीमहि तन्नो लक्ष्मीः प्रचोदयात्**
**शर्कराघृत संयुक्तं मधुरं स्वादुचोत्तमम् ।**
**उपहार समायुक्तं नैवेद्यम् प्रतिगृह्यताम् ॥**
**ॐ श्री महालक्ष्म्यै नमः नैवेद्यं निवेदयामि,**
**नाना ऋतुफलानि च समर्पयामि ।**

**आचमनम्–**

आचमनको लागि पाँचपटक जल अर्पण गर्नुहोस् ।

**ॐ प्राणाय स्वाहा, ॐ अपानाय स्वाहा, ॐ व्यानाय स्वाहा, ॐ उदानाय स्वाहा, ॐ समानाय स्वाहा । ॐ श्री महालक्ष्म्यै नमः आचमनीयम् समर्पयामि ॥**

**ताम्बूल–**

**पुंगीफलं महद्दिव्यं नागवल्ली दलैर्युतम्**
**एलाचुर्णादि संयुक्तं ताम्बूलं प्रतिगृह्यताम् ।**
**ॐ श्री महालक्ष्म्यै नमः ताम्बूलं समर्पयामि ॥**

**नीराजन–**

यसपश्चात् नीराजन गर्नुहोस् ।

**न तत्र सूर्यो भाति न चन्द्र तारकं नैता विद्युतो कुतो यमग्निः ।**
**समेन भान्तम् अनुभाति सर्वं तस्य भासा सर्वमिदं विभाति ॥**
**ॐ श्री महालक्ष्म्यै नमः नीराजनं समर्पयामि ।**

**जल आरती–**

जलले आरती गर्नुहोस् ।

**ॐ द्यौः शान्तिरन्तरिक्ष (गूं) शान्तिः पृथिवी शान्तिरापः शान्तिरोषधयः शान्तिर्वनस्पतयः शान्तिर्विश्वेदेवाः शान्तिः ब्रह्म शान्तिः सर्व (गूं) शान्तिः शान्तिरेव शान्तिः सा मा शान्तिरेधि ।**

**प्रदक्षिणा–**

निम्न मन्त्रका साथ माताको प्रदक्षिणा गर्नुहोस् ।

**सर्वमंगललाभाय सर्वपापनिवृत्तये**
**प्रदक्षिणां करोम्यम्ब ! प्रसीद परमेश्वरि ॥**
**ॐ श्री महालक्ष्म्यै नमः प्रदक्षिणां समर्पयामि ।**

**पुष्पांजलि–**

निम्न मन्त्र उच्चारण गर्दै पुष्पाञ्जलि अर्पण गर्नुहोस् ।

**पुष्पांजलिं गृहाणेमां परब्रह्मस्वरूपिणी ।**
**भक्त्या समर्पितं देवि ! प्रसन्ना भव सर्वदा ॥**
**ॐ श्री महालक्ष्म्यै नमः पुष्पांजलिं समर्पयामि ।**

**क्षमा प्रार्थना–**

अब हात जोडेर क्षमा प्रार्थना गर्नुहोस् ।

**आवाहनं न जानामि न जानामि विसर्जनम् ।**
**पूजां चैव न जानामि क्षमस्व परमेश्वरि ॥**
**मंत्र हीनं क्रिया हीनं भक्ति हीनं न सुरेश्वरि**
**यत्पूजितं मया देवि परिपूर्णं तदस्तु मे ॥**
**ॐ तत् सद् ब्रह्मार्पणमस्तु । अनेन कृतेन पूजाराधन कर्मणा श्री महालक्ष्मी प्रीयताम् !**

दाहिने हातमा जल लिएर छोडिदिनुहोस् । फेरि सबै परिवार मिलेर भगवती लक्ष्मीलाई प्रणाम अर्पण गर्नुहोस् र प्रसाद ग्रहण गर्नुहोस् ।

जय गुरुदेव !

❑

...राजदरबारको चौघेरामा
गरिएको क्षेत्र र पछिल्लो स
मौज्दात सुरक्षित र संग्रहित
भण्डारखाल क्षेत्र उत्तरमा मखन
दक्षिण) र पूर्वमा नयाँसडक पीप
थियो । वि.सं. १९९० को म
क्रममा तत्कालीन प्रधानमन्त्री
धर्मपथ, गंगापथ तथा जुद्धसडक
भण्डारखाल क्षेत्र खुम्चिन ग
खुम्चिँदा पहिले दरबारपरिसर
नयाँसडक पीपलबोट डबली त
भण्डारखाल भगवती (श्रीमहाल
शिखर शैलीमा निर्मित मन्दिरक
अष्टादशभुजाधारिणी सिंहवाहिनी
अति कलात्मक सुन्दर शिला
श्रीगणेशका केही साना मूर्तिहर

# न्यूरोडको

वन वाटिकाको लागि व्यवस्था
मयमा राज्यकोषको भौतिक
गर्ने हनुमान्ढोका दरबारको
गल्ली (वाकादे, इन्द्रचोकको
लबोट (पाको) सम्म फैलिएको
हाभूकम्पपछि पुनर्निर्माण गर्ने
जुद्धशमशेरले मौजुदा शुक्रपथ,
(नयाँसडक) बनाउन लगाउँदा
यो । यसरी भण्डारखाल क्षेत्र
भित्रका सम्पदा बाहिरिन पुग्दा
था विशालबजारको दक्षिणस्थित
क्ष्मी) मन्दिर बाहिरिन पुगे ।
ो सामान्य वेदीमा दक्षिणाभिमुख
महिषासुरमर्दिनी देवी भगवतीको
मूर्तिको दायाँ कुमार तथा बायाँ
प्रतिस्थापित छन् ।

काठमाडौंको हनुमान्ढोका र बसन्तपुर परिसरमा अवलोकन गर्दा साँच्चै मन्दिरै मन्दिर मात्र देख्दछौं । कुमारी-घरसमेत भएको यस क्षेत्रमा गाईजात्रा, इन्द्रजात्रा तथा भित्री शहरका अन्य पर्व जात्राहरु मनाइन्छन् । शरद ऋतुको आश्विन शुक्ल प्रतिपदादेखि कोजाग्रत पूर्णिमासम्म हनुमान्ढोकामा फूलपाती भित्र्याउने, पचली भैरव जात्रा (पञ्चमी) मार्गको अन्तिम विन्दुजस्ता स्थानीय परम्पराहरु सम्पन्न गर्ने सिलसिलामा सप्तमी र दशमी तिथिमा तलेजु भवानीलाई मन्दिरबाट तल मूल चोकमा ल्याउने र फिर्ता लैजाने पूजाकार्य भर्खरै मनाएको दशैंमा पनि सम्पन्न गरियो । यस क्षेत्रमा भगवती मन्दिरहरुको

# महालक्ष्मी मन्दिर

संख्या निर्क्यौल गर्न भण्डारखाललगायत हनुमान्ढोका, बसन्तपुर परिसरको मौलिक परिधि पहिचान गर्नु आवश्यक छ । राजदरबारको चौघेरामा वन वाटिकाको लागि व्यवस्था गरिएको क्षेत्र र पछिल्लो समयमा राज्यकोषको भौतिक मौज्दात सुरक्षित र संग्रहित गर्ने हनुमान्ढोका दरबारको भण्डारखाल क्षेत्र उत्तरमा मखन गल्ली (वाकादे, इन्द्रचोकको दक्षिण) र पूर्वमा नयाँसडक पीपलबोट (पाको) सम्म फैलिएको थियो । वि.सं. १९९० को महाभूकम्पपछि पुनर्निर्माण गर्ने क्रममा तत्कालीन प्रधानमन्त्री जुद्धशमशेरले मौजुदा शुक्रपथ, धर्मपथ, गंगापथ तथा जुद्धसडक (नयाँसडक) बनाउन लगाउँदा भण्डारखाल क्षेत्र खुम्चिन गयो । यसरी भण्डारखाल क्षेत्र खुम्चिँदा पहिले दरबारपरिसरभित्रका सम्पदा बाहिरिन पुग्दा नयाँसडक पीपलबोट डबली तथा विशालबजारको दक्षिणस्थित भण्डारखाल भगवती (श्रीमहालक्ष्मी) मन्दिर बाहिरिन पुगे । शिखर शैलीमा निर्मित मन्दिरको सामान्य वेदीमा दक्षिणाभिमुख अष्टादशभुजाधारिणी सिंहवाहिनी महिषासुरमर्दिनी देवी भगवतीको अति कलात्मक सुन्दर शिलामूर्तिको दायाँ कुमार तथा बायाँ श्रीगणेशका केही साना मूर्तिहरु प्रतिस्थापित छन् ।

राजा महेन्द्र मल्लले तुलजा भवानीको भव्य मन्दिर निर्माण गराउनुपूर्व माता भवानीलाई नयाँसडक पीपलबोटको डबली र विशालबजार भवन प्रांगणमा स्थित मन्दिर हुँदै भव्य मन्दिरमा विराजमान गराइएको सुन्नमा आउँछ । आश्विन शुक्ल अष्टमी (महाअष्टमी) मा तुलजा भवानी माताको कर्माचार्य पूजारीहरुबाट सर्वप्रथम पीपलबोट डबलीस्थित मातृका पीठमा विधिवत् तान्त्रिक पूजा भएपश्चात् माता तुलजा भवानी र भण्डारखाल भगवतीको पूजा सम्पन्न गरिने परम्परा अद्यावधि कायमै रहेको कथन छ ।

महाभूकम्पपछिको पुनर्निर्माणमा भण्डारखाल भगवती (श्रीमहालक्ष्मी) मन्दिरसँगै नागरिक भेला सम्मेलनका लागि 'टाउनहल' नामबाट एउटा भव्य भवन बनाउन लगाएका थिए । यसै भवनमा 'जनसेवा' नाउँमा संचालित भवन सिनेमा हल पछि आगलागीबाट ध्वस्त भयो । यही स्थानमा विशालबजारको भवन ठडिएको छ । सिनेमा हल संचालन भएको अवधिमा माता भगवतीको मन्दिर परिसर उपेक्षित रही अति फोहोर अवस्थामा थियो । पछि भक्तहरुको प्रयासले मन्दिरको मर्मत संभार तथा सरसफाइ भयो । मेरो सेवा गर तिम्रो फलिफाप हुन्छ भनी सपनामा दर्शन दिने कुराहरु सुन्नमा आउँछन् । मरु, काठमाडौं निवासी स्व. सुर्ज्यलाल श्रेष्ठले देवीबाट उहाँलाई सपनामा आज्ञा भए अनुसार माता भगवतीको सेवामा लाग्दै मन्दिर प्रांगणमा हाल देखिएको अष्टमातृका सहितको भैरव पञ्चायन, कलशयुक्त श्रीयन्त्र २०२९ मार्ग महिनामा स्थापना गर्नुभएको थियो । मन्दिर मर्मत संभार गर्दा उहाँले नै भगवतीको मूर्तिमाथि श्री महालक्ष्मी देवी शरण छाप्न लगाउनुभएको थियो ।

माता भगवतीको सेवाक्रममा उपेक्षा गर्न नहुने अन्यथा अनिष्ट हुने किंवदन्ती रहेको छ । पहिले राजपरिवारबाट पठाइने गरिएको वार्षिक पूजा विगत वर्षदेखि बन्द रहेको कुरा एकजना भक्त बताउनुहुन्छ । सम्पूर्ण श्वेतस्वरूपा देवीले 'मन्दिरमा आई सेवा गर्नू, उद्धार हुनेछ' भनी सपनामा आज्ञा भएपछि सोहीबमोजिम ३५ वर्षदेखि हालसम्म मन्दिर प्रांगणमै बसी पूजादि कर्म तथा सरसफाइमा लाग्नुभएको कुरा ९२ वर्षीय वृद्धा सुनाउनुहुन्छ ।

काठमाडौंवासीले दशैंको बेला आश्विन शुक्ल प्रतिपदादेखि नवमीसम्म प्रत्येक दिनको बिहानी (ब्रह्ममुहूर्त) मा एक एक तीर्थस्थलमा गई देवदेवी, पीठादिको दर्शन पूजा गरी मनाउँदै आएको नवरात्रि मेलामा एक दिन तुलजा भवानी र भण्डारखाल भगवतीको दर्शन पूजा गर्ने परम्परा रहिआएको छ । दशैंको टीकाको दिन तुलजा भवानी र भण्डारखाल भगवतीको टीका प्रसादले श्रीकुमारीको पूजा भएपछि मात्र श्रीकुमारीबाट जनसाधारणलाई टीका प्रदान हुन्छ ।

जय गुरुदेव !

## गुनासो छ भने लेख्नुहोस्

- के तपाईंको पत्रिकासँग सम्बन्धित कुनै गुनासो छ ?
- के तपाईंलाई पत्रिका नियमित प्राप्त भइरहेको छैन ?
- के तपाईंको सदस्यता अवधिमा त्रुटि देखिन्छ ?
- के तपाईंलाई पत्रिका सदस्य विस्तार गरेबापतको उपहार प्राप्त भएको छैन ?
- के तपाईं पत्रिका आइपुग्ने आफ्नो ठेगाना परिवर्तन गर्न चाहनुहुन्छ ?
- के तपाईंका यसका अतिरिक्त अरू पनि गुनासा तथा समस्याहरू छन् ?

आफ्नो गुनासोलाई पत्र, इमेल, फोनबाट वा भेटेर पत्रिका वितरण तथा पुस्तकालय व्यवस्थापन उपविभागमा तुरुन्त जानकारी गराउनुहोस् । सम्भव भएसम्म समस्याको समाधान तुरुन्त हुनेछ । साथै, गोरक्ष निखिल वाणीका पुराना अङ्कहरू चाहिएमा सम्पर्क राख्नुहोला ।

**पत्रिका वितरण तथा पुस्तकालय व्यवस्थापन उपविभाग,**
फोन : ०१६२२५१७७

परमपूज्य सद्गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथका लीलाहरूको वर्णन गरी तयार पारिएको श्री गोरख महापुराणलाई शृङ्खलाबद्धरूपमा प्रकाशित गर्दै लगिएको छ । यसबाट परमपूज्य सद्गुरुदेवको बारेमा जान्न, बुझ्न खोज्ने सम्पूर्ण पाठकहरू लाभान्वित हुनुहुनेछ भन्नेमा हामी विश्वस्त छौँ । यस महापुराणलाई संकलन एवं अनुवाद गरी प्रस्तुत गरिएको हो । यससम्बन्धी सम्पूर्ण कुराहरूको जिम्मेवारी संकलक एवं अनुवादक (विष्णु खनाल,गोर्खा) स्वयंको नै हुनेछ ।

## (एकाउन्नौं भाग)

राजन् ! जो कुटुम्ब विषयभोगको अगाडि अरू सुखलाई सुख नै सम्झदैन एवं आफ्नो कुटुम्वहरुको भरणपोषणलाई नै सुख सम्झेर आफ्नो सम्पूर्ण विवेकलाई गुमाएर बस्दछ उसलाई कहिल्यै पनि शान्ति मिल्न सक्दैन । त्यो पनि परेवाजस्तै आफ्नो कुटुम्बसँगै घोर दुःख पाएर एकदिन नष्ट हुन्छ। मानव शरीर भनेको मुक्तिको लागि भगवान्ले रच्नुभएको हो। मानव शरीरलाई पाएर पनि यो परेवाजस्तै घर-गृहस्थमा फँस्दछ। राजन्! भगवान्ले त मनुष्यलाई यो मानव जीवन धेरै उचाइमा चढ्नको लागि दिनुभएको हो। तर यो माथि उठ्नुको साटो तलतिर नै झरिरहेको छ।

राजन् ! सबै प्राणीहरुलाई आफ्नो इच्छाविपरीत पूर्वजन्मको कर्मानुसार सुख, दुःख प्राप्त हुन्छ नै। इन्द्रियसम्बन्धी सुख त नरक वा स्वर्ग जहाँ रहे पनि मनुष्यलाई प्राप्त भइरहन्छ। यसकारण वास्तविक सुख, दुःखको रहस्य जान्नको लागि बुद्धिमान् मनुष्यले सुखको लागि इच्छा वा कुनै प्रकारको प्रयत्न नगरोस्। बिनाइच्छा, नमागीकन रुखा-सुखा जस्तो मिल्दछ, स्वादिष्ट होस् वा नहोस् अजिंगरले जस्तै त्यसैलाई खाएर आफ्नो जीविका निर्वाह गर्नू र जगत्‌बाट सदा उदासीन बनिरहनू । राजन् ! मैले अजिंगरबाट यही गुण सिकेको छु।

जुन गुण मैले समुद्रबाट सिकेको छु, त्यसलाई पनि ध्यान दिएर सुन । हे राजन् ! साधकले सदा प्रसन्न र गम्भीर रहनुपर्छ, उसको भावको आधार अपार र असीम हुनुपर्छ तथा कसैको लागि पनि क्रोध गर्नुहुँदैन। उसले त्यसरी नै रहनुपर्छ जसरी ज्वारभाटाको परवाह नगरेर समुद्र शान्त रहन्छ। समुद्र वर्षा ऋतुमा पनि अरू नदीनालाहरुको बाढीको कारणले बढ्दैन र ऊ गृष्म ऋतुमा पनि घट्दैन । त्यसरी नै भगवान्‌परायण साधकले पनि सांसारिक पदार्थको प्राप्तिबाट प्रफुल्लित हुनु हुँदैन ।

हे राजन् ! मैले कीटपतंगबाट यो शिक्षा अपनाएको छु कि जसरी ऊ दीयोको ज्वालामा मोहित भएर जलेर मर्दछ त्यसैगरी आफ्नै इन्द्रियमा नियन्त्रण नराख्ने व्यक्ति पनि नारीलाई देखेर लठ्ठ हुन्छ र उसको फन्दामा फँसेर आफ्नो सर्वनाश आफै गर्दछ। साँच्ची नै स्त्री त्यो माया हो जसबाट देवताहरुले पनि हार मानेका छन् । देवतास्वरूप मनुष्य जीवनलाई पनि यो स्त्रीरूपी माया मोक्ष प्राप्तिमा बडो ठूलो बाधा हो । जो मूर्ख मनुष्य कामिनी, कंचन (सुन) लगायतका नाशवान पदार्थहरुमा फँसिरहन्छ उसको चित्तवृत्तिको सम्पूर्ण वृत्ति स्त्रीको भोग र उसका गहना कपडामा नै अल्झेर आफ्नो बुद्धि, विवेक गुमाएर त्यस परेवाजस्तै नष्ट हुन जान्छ। राजन्! संन्यासीहरुले गृहस्थहरुलाई कष्ट नदिई भमराको जस्तै आफ्नो जीवन निर्वाह गर्नुपर्छ ।

जसरी भमरा विभिन्न फूलहरुबाट त्यसको सार ग्रहण गर्दछ त्यसरी नै साधकले आफ्नो शरीरको रक्षाका लागि रोटीका टुक्रा धेरै घरहरुबाट मागेर आफ्नो जीवन निर्वाह गर्नू र साना र ठूला शास्त्रहरुको सार ग्रहण गर्नू अर्थात् शास्त्रहरुको रस निचोर्ने व्यक्ति नै बुद्धिमान् कहलाउने अधिकारी हो ।

**हरि ॐ तत्सत् ।**

## (बाउन्नौं भाग)

राजन् ! मैले मौरीबाट यो शिक्षा सिकेँ कि संन्यासीले अघिल्लो दिनको लागि भिक्षा संग्रह गर्नुहुन्न, न भिक्षाका लागि ऊसँग कुनै भाँडो नै राख्नुपर्छ । भगवान्ले दिनुभएको हात नै उसको

लागि पात्र (भाँडो) हो र भिक्षा राख्नको लागि कुनै पात्र छ भने त्यो केवल उसको पेट हो। यदि संन्यासीले संग्रह गर्न शुरु गऱ्यो भने मौरीलाई जस्तै उसलाई जिउन गाह्रो हुन्छ।

हे राजन् ! मैले हात्तीबाट यो सिकेँ कि संन्यासीले सपनामा पनि आफ्नो गोडाबाट समेत काठले बनेको स्त्रीको पनि स्पर्श गर्नुहुँदैन। जसले यस कुरालाई मान्दैन त्यसको पनि त्यही गति हुन्छ जो ढोई (हात्तिनी) को साथ मिलेर हात्तीको हुन्छ।

विवेकी मनुष्यले कुनै पनि कामिनीको विषयभोगलाई सपनामा पनि स्वीकार नगर्नू किनकि नारी नै पुरुषका लागि साक्षात् मृत्यु हो। जुन साधक स्त्रीलाई स्वीकार गर्दछ त्यो पनि हात्तीजस्तै अधिक बलवान् मनुष्यद्वारा मारिनेछ।

हे राजन् ! मैले मह झिक्ने मानिसबाट यो शिक्षा ग्रहण गरेको छु कि संसारभरिका लोभी मानिस पनि बडो कठिनाइका साथ धनको संचय गर्दछन् र रगत, पसिना बगाएर संचय गरेको त्यो कमाइ दान पुण्यमा सदुपयोग नगरी, नखाई-नपिई राख्दछन्। जसरी मह बेच्नेले मौरीद्वारा जम्मा गरेको मह निकालेर लैजान्छ, त्यसरी नै मानिसले संचय गरेको धन-सम्पत्ति अरू व्यक्तिहरुले हात पार्छन्। जसरी मौरीले जम्मा गरेको मह मौरीले खानुभन्दा पहिले नै मानिसहरुले मौरीलाई नै मारेर त्यस मह निकालेर लैजान्छन्, त्यसैगरी गृहस्थहरुले बडो मुश्किलसँग जम्मा गरेको पदार्थ, जसलाई उनीहरु सुखको साधन सम्झन्छन्, लाई पनि अरूले नै उपभोगमा ल्याउँछन्।

हे राजन् ! मैले हरिणको जीवनबाट यो शिक्षा लिएको छु कि साधकले कहिल्यै पनि विषय वासनासम्बन्धी गीत सुन्नु हुँदैन। साधकहरुले पनि हरिणबाट यो शिक्षा ग्रहण गर्नुपर्दछ कि हरिण जसरी व्याधाको गीतबाट मोहित भएर आफै नै बाँधिन्छ, त्यसरी नै हरिणको गर्भबाट जन्म लिने ऋषि शृङ्गमुनि पनि स्त्रीहरुको विषयसम्बन्धी गाना-बजाना सुनेर स्त्रीहरुको हातको कठपुतली बनेका थिए भने अज्ञानी मनुष्यहरुले त जिद्दी गर्नु पनि व्यर्थ छ।

जसरी काँटा (बल्छी) मा अड्किएको मासुको टुक्राको लोभमा माछा आफ्नो प्राण गुमाउँछ, त्यसैगरी स्वादको लोभी दुर्बुद्धि मनुष्य पनि आफ्नो मनलाई नियन्त्रणमा नराखेर मन मथ्ने जिब्रोको वशमा हुन्छ र बिनामृत्यु नै मारिन्छ। साधक भोजन बन्द गरेर अरू इन्द्रियमाथि त विजय प्राप्त गर्न सक्ला तर रसेन्द्रियलाई वशमा गर्न धेरै कठिन छ। त्यसो त भोजन बन्द गर्नाले भोक अझ प्रबल हुन जान्छ। मनुष्य तबसम्म यस इन्द्रियमाथि विजय प्राप्त गरेर जितेन्द्रिय बन्न सक्दैन जबसम्म आफ्नो रसेन्द्रियलाई आफ्नो वशमा गर्दैन। रसेन्द्रियलाई वशमा गरेमा बाँकी सबै इन्द्रियहरु आफै वशमा हुनेछन्, यसपछि तिनलाई वशमा गर्नु ठूलो कुरा हुँदैन। हे सज्जनहरु हो ! अगाडि नै महात्मा र खजुरोसम्बन्धी कथा तपाईंहरुले पढिसक्नुभएको छ। त्यही सबैभन्दा सरल र सीधा उपाय नै साधकहरुका लागि सुलभ हो।

हे राजा नृपनन्दन ! प्राचीनकालमा जनक राजा विदेहको नगरमा पिंगला नामकी एक वेश्या थिई। मैले उसको कथाबाट ग्रहण गरेको शिक्षा पनि तिमीलाई सुनाउँछु। सावधान भएर ध्यानपूर्वक सुन। त्यो एक स्वेच्छाचारिणी त थिई नै, साथै रूपवती पनि थिई। उसको मनमा पनि धन संग्रह गर्ने बडो लालसा थियो। धनको चिन्ताको कारण नै उसको रातको निद्रा हराएको थियो। एकदिन ऊ रातभरि कुनै कामी पुरुषको बाटो हेर्दै रही। तर त्यस दिन कुनै पनि कामी पुरुष उसकहाँ आएन। यसपछि उसको मनमा बडो ग्लानि हुन लाग्यो। उसले विचार गरी– मैले केवल धनको लागि धेरै ठूलो निन्दित कर्मलाई अपनाएँ। धनबाट कुनै सुख पाइनँ। धनको इच्छामा मेरो सर्वस्व लुटियो। धिक्कार छ यस धनलाई ! धिक्कार छ मलाई र मेरो आशालाई ! पिंगलाले पश्चाताप गरेर विलाप गर्दै भन्न लागी– हाय ! हाय ! म इन्द्रियहरुको अत्यन्तै अधीन हुन गएँ। मेरो मोह-ममताको विस्तारलाई त हेर। कुनै अस्तित्व नै नभएका यी विषयी लम्पट पुरुषहरु, अधर्मीहरुबाट विषयसुखको लालसामा म मतवाली बनेकी थिएँ। बडो दुःखको कुरा छ कि म समझदार भएर पनि मूर्ख नै बनी रहेँ। केही गम्भीर भएर विचार गर्दा त मेरो हृदयको नजिक जगतपालक मेरा सच्चा स्वामी परमपिता परमात्मा विराजमान हुनुहुन्छ। उहाँ नै सारा जगतका वास्तविक प्रेम र परमार्थका वास्तविक सुख दिने धनका स्वामी हुनुहुन्छ। मलाई आभास भइरहेको छ कि जगत भ्रम हो, केवल भगवान् नै सत्यस्वरूप हुनुहुन्छ।

मैले भगवान्लाई पनि बिर्सेर दुष्ट पुरुषहरुको सेवन गर्दै रहेँ। यस सेवनबाट मेरो एउटा इच्छा पनि पूरा भएन। झन् उल्टो दुःख, भय, शोक, रोगमा नै जीवन फँस्यो। मेरो मूर्खताको हद नाघ्यो। मैले नर्कमा जानको लागि कुमार्गको बाटो अपनाएँ। बडो दुःखको विषय छ कि मैले अति निन्दित कर्म गरेँ। वेश्यावृत्तिद्वारा आजीविका गरेर व्यर्थ नै आफनो शरीर र मनलाई कष्ट पुऱ्याएँ। के मेरो यो शरीर बिकेको छ ? यसलाई कामी, कुकर्मी लम्पटहरुले खरीद गरेका छन् ? म पनि कति मूर्ख छु कि आफ्नो यस शरीरद्वारा नै धन कमाएर रतिसुखलाई चाहेँ। हजारपटक धिक्कार छ म पापिनीलाई ! यस बाँसजस्तै मासु र हाडहरुको टेढो र तेर्सो ढाँचा, जुन मलमूत्रबाट भरिएको छ, जसको कारणबाट यस शरीरका सबै ढोकाहरुबाट दुर्गन्ध निस्किरहन्छ, यस शरीरद्वारा सञ्चित सम्पत्ति जो मेरा मलमूत्रका कमाइ हुन्, त्यसैको म नित्य सेवन गर्दछु। म बाहेक अरू कुन अभागी स्त्री होली जो अधम शरीरलाई आफ्नो सम्झेर यसको दुरूपयोग गरिरहन्छे। यो विदेह जनक राजाको नगर हो जसमा म दुष्ट, मूर्ख नारीले पनि जन्म लिएकी छु। तर मैले तीनै लोकहरुका कर्ता, धर्ता परमपिता परमात्मालाई भुलेकी छु र रातदिन परपुरुषको अभिलाषा गरिरहन्छु। यति हुँदा पनि घट-घटवासी प्रभु समस्त जगत्का हितैषी मेरा सम्राट् अवश्य नै मेरो हृदयमा पनि विराजमान हुनुहुन्छ र आफ्नी यस कुपुत्रीमाथि पनि दयालु देखिनुहुन्छ। तब त यस दुर्दशामा पनि उहाँले मेरो हृदयमा यस प्रकार वैराग्य उत्पन्न गरिदिनुभएको छ। निश्यच नै प्रभु कृपाबाट मिलेको यो वैराग्य मेरो दुःख नाश गरेर, मेरो भाग्यलाई चम्काउने बनोस्। यदि म मन्दभागिनी भएको भए मलाई यति धेरै कष्ट किन झेल्नुपर्थ्यो ? प्रभु कृपाबाट नै वैराग्यको जन्म हुन्छ। वैराग्यद्वारा नै मनुष्यले जगत्का सबै बन्धनहरुबाट निस्केर शान्तिपथको लाभ ग्रहण गर्दै मुक्ति प्राप्त गर्दछ।

अब म सदाको लागि विषयभोगलाई छोडेर भगवान्को यस उपकारलाई आदरपूर्वक स्वीकार गरेर उनै जगदीश्वर प्रभुको शरण ग्रहण गर्छु जो जगत्को उद्धार गर्ने हुनुहुन्छ। यो अभागी जीवन सम्झेर बुझेर पनि भ्रमजालमा फँसेको छ र विषयभोगले यसलाई अन्धो बनाइदिएको छ, जबकि कालरूपी अजिंगरले यसलाई मुखमा दबाइराखेको छ। तपाईं नै बताउनुहोस् भगवान्का अतिरिक्त यसको उद्धार गर्न दोस्रो को समर्थ होला ?

हरि ॐ तत्सत्।

जय गुरुदेव !

# जीवन-प्रेम

***यस स्तम्भअन्तर्गत हामीले सद्‌गुरुदेव डा. नारायण दत्त श्रीमालीज्यूले आफ्नो अवतरणकालमा विभिन्न समयमा विभिन्न विषयमा दिनुभएको प्रवचनलाई धारावाहिकरूपमा प्रस्तुत गर्ने क्रममा 'प्रेम धार तलवार की' विषयको प्रवचनलाई अनुवाद गरी प्रकाशन गरिएको छ ।***

त्यसैले मैले यसपटक तिमीलाई ध्यान र धारणासम्म लिएर जान्न । यसैले मैले आज तिमीलाई मन्त्र वा अनुष्ठान दिइरहेको छैन, यसैले आज म तिमीलाई त्यस डुंगामा यात्रा गराइरहेको छु, त्यस सागरमा छचल्किने क्रिया सिकाइरहेको छु जहाँ अथाह आनन्दको परिपूर्णता छ, जहाँ श्रेष्ठता छ, जहाँ मस्ती छ, जहाँ सुख छ । जसको प्रारम्भ मनुष्य जीवनबाट छ भने त्यसको अन्त इष्टको साक्षात्कारबाट छ । यो बाटो सरल छ, यो बाटो आनन्दप्रद, यो बाटो मधुरताको, श्रेष्ठताको हो । यो बाटो जीवनको प्रफुल्लताको हो । सबैभन्दा ठूलो कुरा यो हो कि प्रेमको माध्यमबाट जीवनको अणु-अणु, जीवनको कण-कण र जीवनको रोम-रोम, जीवनको प्रत्येक कार्यमा आनन्दको महसुस हुन्छ, एक प्रकारको सुगन्ध आउँछ, सुवास आउँछ, एउटा तरंग आउँछ ।

जुन क्षण शिष्यको जीवनमा तरंग आउँछ, जुन क्षण उसको जीवनमा आनन्दको

लहर आउँछ, ऊ निरन्तर अग्रसर हुँदै रहन्छ, किनकि लहर रोकिन्न । पत्थर वा काठ एक ठाउँमा रोकिन्छ, लहर रोकिन्न... लहर त निरन्तर गतिशील छ, लहरमा निरन्तर अगाडि बढ्ने क्रिया हुन्छ, लहर किनारा प्राप्त गर्ने सहज स्वाभाविक वृत्ति हो, र यसैले म तिमीलाई लहर बनाउन चाहन्छु । यसैले यदि म महासमुद्र हुँ भने म तिमीलाई त्यस महासमुद्रको एउटा लहर बनाउन चाहन्छु। म तिमीलाई काठको छेस्का बनाउन चाहँदिन । तिमीलाई बाटोको चट्टान बनाउन चाहँदिन । म चाहन्छु कि तिमी लहर बनेर अगाडि बढ्न सक, म चाहन्छु कि तिमी निरन्तर किनारातर्फ अग्रसर हुन सक, म चाहन्छु कि तिमीले त्यस समुद्रमा यात्रा गर्न सक जहाँ अथाह प्रेम, एउटा परितृप्ति छ.. र, यसैले म आज तिमीलाई त्यस प्रेमतर्फ अग्रसर गरिरहेको छु ।

जीवनमा सबै कुरा प्राप्त हुन सक्छ– ज्ञानश्चेतना, सुख-सौभाग्य, आनन्द, मस्ती र अन्य प्रकारका भौतिक सुविधाहरु तर यी सबै भएपछि पनि यो जरुरी छैन कि प्रेम प्राप्त होस् ।

मेरो प्रवचनको सारभूत तथ्य, मैले पहिले नै स्पष्ट गरिसकेको छु, र फेरि स्पष्ट गरिरहेको छु कि 'वासना' र 'प्रेम'मा अत्यन्तै अन्तर छ, वासना देहको सुख हो, वासना एउटा घृणित र घटिया काम हो जसबाट केवल हामीले आफूजस्तै एउटा अन्य प्राणीलाई उत्पन्न गर्न सक्छौं– यस संसारमा दु:ख पाउनका लागि, दिक्क हुनका लागि, जुझ्नका लागि । तर प्रेमले कुनै प्रकारको याचना गर्दैन, प्रेमले कुनै प्रकारको चाहना राख्दैन। प्रेमले कुनै प्रकारले प्राप्त गर्ने भावना राख्दैन । प्रेमको तात्पर्य हो– दिनु र सबै कुरा दिने क्रिया ।

प्रेम चाहन्छ कि मैले सबै थोक प्रदान गरूँ..., आफैलाई उत्सर्ग गरिदिऊँ, न्यौछावर गदिदिऊँ । न्यौछावर गरिदिने क्रिया प्रेम हो, यो आफैलाई समर्पण गर्ने क्रिया प्रेम हो, त्यसैले सही शब्दमा भन्ने हो भने प्रेम स्त्रीले गर्न सक्दछे, पुरुषले गर्नै सक्दैन । पुरुषले जब प्रेम गर्दछ, ऊ हिसाब लगाउन थाल्दछ, चिन्तन गर्न थाल्दछ, विचार गर्दछ कि यस्तो गर्नाले के हुन्छ, कति हुन्छ र कसरी हुन्छ । स्त्री यो गर्न सक्तिन, स्त्रीले खण्ड-खण्डमा प्रेम गर्न सक्तिन । उसले केही सोच्दिन, स्त्रीले त आफैलाई पूर्णरूपमा समर्पित गर्न सक्दछे ।

यसैले संसारमा 'मीरा' नारी मात्र बन्न सकिन्, कुनै पुरुष मीरा बन्न सकेनन् । सूर चाहेर पनि पनि मीरा बन्न सकेनन् । बुद्धले यदि पूर्णरूपमा प्रयत्न गरेको भए पनि मीरा बन्न सक्दैन थिए । महावीरले प्रयत्न गरेर पनि मीरा बन्न सक्दैनथे किनकि मीरा बन्नका लागि नारी हृदय चाहिन्छ, एउटा हृदयको सुगन्ध चाहिन्छ... त्यो हृदयको सुगन्ध स्त्रीसँग हुन्छ । त्यो हृदयको पूर्णता स्त्रीसँग हुन्छ । पुरुषले त्यस प्रेमलाई प्राप्त गर्नका लागि स्त्रीको रूप धर्दछ, तर स्त्रीको हृदय प्राप्त नहुनाले असफल हुन्छ । त्यसैले प्रेमको समुद्रमा फाल हाल्न सोच्नु जरुरी छैन ।

यस महासमुद्रको यात्रामा जब म तिमीलाई लहर बन्नका लागि भनिरहेको छु तब तिमी पनि ती लहरहरुमा छचल्किन सक्दछौ, तिमी पनि बहन सक्दछौ, तर त्यसबेला तिमीले आफ्नो चिन्तनलाई, विचारलाई, धारणालाई एउटा किनारामा छोडेर आउनुपर्छ... तर्क र गणित किनारमा राखेर तिमी लहरहरुमा फाल हाल्न सक्दछौ, जब पूरा आफूलाई त्यसमा डुबाउन सक्दछौ, तब तिमीले प्रेमको परिभाषा बुझ्न सक्छौ, तब तिमीले त्यस सुगन्धको महसुस गर्न सक्दछौ, तब तिमीमा एउटा चिन्तन, एउटा विचार, एउटा धारणा बन्दछ कि जीवनको एउटा आनन्द छ, तब तिमी यस समुद्रमा उत्रन सक्दछौ, त्यस समुद्रमा अगाडि बढ्न सक्दछौ ।

यस अनन्त समुद्रको एउटा किनारा जहाँ जन्म छ, त्यही अन्तिम किनारा मोक्ष छ, गुरुसँग आत्मसाक्षात्कार छ, इष्टमा आफैलाई लीन गर्ने क्रिया छ । यसैले तिम्रो जन्मदेखि आत्मसाक्षात्कार गर्ने पूरा क्रियाको नाम महासमुद्र हो... र तिमी त्यसको एउटा लहर हौ, तिमी बगिरहेको लहर हौ... तर तिमी ठण्डा, टुक्रा-टुक्रामा खण्डित धार हौ, शान्त जल हौ... लहर बन्न पाएका छैनौ, एउटा तलाउको जल हौ, जुन स्थिर छ ।

–र, तलाउको जल यदि स्थिर छ भने त्यसमा गन्ध आउँछ किनकि उसमा गति हुन्न, उसमा चञ्चलता हुन्न, त्यसैले म तिमीलाई तलाउको जल बनाउन चाहँदिन । यसैले म तिमीलाई तलाउको घेरामा आबद्ध गर्न चाहँदिन । म तिमीलाई आज समुद्रमा छलांग लगाउने कुरा बताइरहेको छु, म तिमीलाई त्यस महासमुद्रमा छलांग लगाएर लहर बन्ने क्रिया सिकाइरहेको छु । हुनसक्छ त्यो लहर कहिले १५-२० फीट माथि उठ्ला, वा हुनसक्छ दुई फीट मात्र माथि उठ्ला, तर जब तिमी लहर बन्छौ तब एउटा उचाइ आउँछ, समाप्त हुने क्रिया भने हुने छैन... र जसले माथि उठ्ने क्रियालाई जान्यो त्यसले एकदिन आत्मसाक्षात्कार पनि गर्न सक्दछ... त्यो प्रेमको पूर्णतासम्म पनि पुग्न सक्दछ ।

त्यसैले रामानन्दले भनेका छन्– यदि तिमी इष्टको साक्षात्कार गर्न चाहन्छौ भने म तिमीलाई पहिलोपटक सोधिरहेको छु, फेरि दोस्रोपटक सोधिरहेको छु, तेस्रोपटक सोधिरहेको छु...मैले हरेक पटक तिमीसँग यही कुरा सोधेको छु कि "तिमी प्रेम गर्न जान्दछौ ?"

यसैले आज "म" तिमीसँग यही प्रश्न सोधिरहेको छु कि साधना गर्ने, उपासना गर्ने, मंत्र जप गर्ने, गुरु मंत्र जप गर्ने, त्यस देवी वा इष्टको दर्शन गर्ने क्रियाभन्दा पहिले के तिमीले आफ्नो हृदय पक्ष जागृत गर्‍यौ ?

–के तिमीले कहिल्यै प्रेम गरेका छौ ?

–के तिम्रो हृदयमा कहिल्यै प्रेमको अंकुर फुटेको छ ?

–के तिमीले कहिल्यै प्रेमको सुगन्धको आभास गरेका छौ ?

–के तिमीले कहिल्यै त्यस बसन्ती हावालाई आफ्नो शरीरमा आत्मसात् गरेका छौ ?

–के त्यस सुगन्धको प्रवाहलाई आफ्नो अङ्गालोमा भरेका छौं ?

क्रमश:

जय गुरुदेव !

# आफ्नो प्रकृति आफैं थाहा पाउनुहोस्

प्रकृति अर्थात् Nature लाई दुई किसिमले बुझ्न सकिन्छ । साधारण भाषामा यस सृष्टिलाई प्रकृति भनिन्छ भने मानिसको बानी-व्यवहारलाई पनि प्रकृतिले जनाउँछ । व्यक्तिपिच्छे प्रकृति फरक-फरक हुन्छ । एउटै आमाको कोखबाट जन्मेका बच्चाहरु पनि फरक-फरक गुणका हुन्छन् । कसैलाई व्यापार मन पर्दछ, कसैलाई विद्यामा रुची हुन्छ इत्यादि । त्यसैले चिकित्सा विज्ञानमा पनि प्रकृतिको आधारमा नै चिकित्सा गर्ने प्रावधान छ । आयुर्वेदमा दशविध परीक्षामध्ये प्रकृति परीक्षा पनि एउटा हो ।

प्राचीनकालमा ऋषि, महर्षि, आयुर्वेदका चिकित्सकहरुले मानिसको प्रकृति (Nature) लाई विचार गरेर मात्र उपचार गर्दथे तर अहिले त्यस्तो गरिएको देखिँदैन । औषधिको मात्रा पनि प्रकृतिमा निर्भर गर्दछ । जस्तैः गर्मी शरीर भएको व्यक्तिले खुर्सानी खान सक्दैन कारण उसमा पित्त (Heat) धेरै हुन्छ, उसले सामान्य मात्राभन्दा कम खुर्सानी सेवन गर्दछ । ऊ पित्त प्रकृतिको पुरुष हुन्छ । जाडो समय आउने बित्तिकै ठीक आहार विहार गरे पनि कतिपयलाई वातव्याधि, आर्थराइटिस आदिले सताइरहेको हुन्छ कारण ऊ वातज प्रकृतिको हुन्छ ।

माताको शोणित (Ovum) र पिताको शुक्राणु (Sperm) को संयोगबाट शिशुको शरीर निर्माण हुन्छ । संयोगको समयमा शुक्राणु तथा डिम्बमा जुन दोष प्रबल हुन्छ सोहीअनुसार शिशुको प्रकृति अर्थात् मानसिक एवं शारीरिक संरचना तयार हुन्छ । यस्तो प्रकृति जीवनभर रहिरहन्छ ।

**शुक्रशोणितसंयोगे यो भवेद्दोष उत्कटः ।**
**प्रकृतिर्जायते तेन तस्या मे लक्षणं शृणु ॥**

**–सु.शा.४/६२**

शुक्र र शोणितको प्रकृति, माताको अवस्था, गर्भाशयको प्रकृति, माताको आहार विहारको प्रकृति तथा महाभूतहरुको विकारको प्रकृतिमा गर्भको प्रकृति निर्भर हुन्छ भन्ने तथ्य सुश्रुत संहितामा उल्लेख गरिएको छ । कतिपय संहिताहरुमा मानिसको पूर्वजन्मदेखिको संस्कार, कर्म आदिमा पनि यस जन्मको प्रकृति निर्भर रहन्छ भनिएको छ ।

आयुर्वेद संहिता ग्रन्थहरुमा प्रकृतिलाई विविधरूपमा विभाजन गरिएता पनि दोषज प्रकृतिको आधारमा सात प्रकारका मानिएका छन् । पृथक् दोषहरुअनुसार १.वात प्रकृति, २.पित्त प्रकृति, ३.कफ प्रकृति । दुई दोषको संयोगअनुसार ४.वातपित्त, ५. वातकफ, ६. पित्तकफ प्रकृति र तीनै दोषको सम संयोगअनुसार ७. समवातपित्तकफ प्रकृति आदि । जन्मदेखि नै प्रत्येक व्यक्ति यी सात प्रकृतिहरुमध्ये कुनै एक प्रकृतिको स्वामी हुन्छ ।

यी प्रकृतिहरुमध्ये सातौं सम प्रकृतिलाई श्रेष्ठ मानिएको छ त्यसपछि कफ प्रकृति उत्तम, पित्त प्रकृति मध्यम, वात प्रकृति हीन तथा दुई दोषहरु मिलेर बनेको प्रकृति निन्दनीय मानिएको छ । सम प्रकृति स्वास्थ्यको दृष्टिले सबैभन्दा उत्तम मानिएको छ जसमा रोग व्याधिको सम्भावना कम हुन्छ ।

**वात प्रकृति मानिसको लक्षण :**

**अल्पकेशः कृशो रुक्षो वाचालश्चलमानसः ।**
**आकाशचारी स्वप्नेषु वातप्रकृतिको नरः ॥**

**– शा.पू.६/२०**

वात प्रकृतिको मानिस अल्पकेशयुक्त, दुब्लो-पातलो, रुखो शरीर भएको, बढी बोल्ने, चञ्चल हुन्छ । आकाशमा उडेको सपना देख्ने गर्दछ ।

**शारीरिक लक्षण** : शरीर रुखो, दुब्लो, कुरूप हुन्छ । छाला खस्रो, फुटेको, अंग नमिलेको, दाह्री, नङ, कपाल, दाँत आदि रुक्ष हुन्छ । शीत सहन नसक्ने, चाँडो-चाँडो हिँड्ने, अल्प भोजन गर्ने तथा भोजनमा अम्ल तथा लवण रसको इच्छा गर्ने, कम बलशाली हुन्छन् ।

**मानसिक लक्षण** : कार्यमा शीघ्र प्रवृत्त हुन्छन्, अल्प स्मृति, बढी बोल्ने, अदृढ स्वभावको, धैर्यरहित, शीघ्र क्षुब्ध हुने, कृतघ्न, मित्रतामा अदृढ, अजितेन्द्रिय, आचारहीन, स्त्रीहरुको अप्रिय, नास्तिक, द्वेषी, मत्सर, चोरी आदि स्वभावका हुन्छन् । सपनामा पर्वत, वृक्षहरु देख्ने र आकाशमा उडेको अनुभव गर्दछन् ।

यस प्रकारका मानिसहरुले चिल्लो र तातो पदार्थको सेवन गर्ने, पर्याप्त सुत्ने, शरीरमा तेल आदिले मालिश गर्ने, पौष्टिक आहार सेवन गर्ने, बोली-व्यवहारमा संयमता राख्ने गर्नुपर्दछ ।

**पित्त प्रकृति मानिसको लक्षण :**

**अकाले पलितैर्व्याप्तो धीमान् स्वेदी च रोषणः ।**
**स्वप्नेषु ज्योतिषां द्रष्टा पित्तप्रकृतिको नरः ॥**

**– शा.पू.६/२१**

अर्थात् पित्त प्रकृतिको मानिसमा असमयमा नै कपाल फुल्ने, शरीरबाट दुर्गन्धमय पसिना धेरै आउँछ, ज्यादा क्रोधीका साथै बुद्धिमान् हुन्छन्, सपनामा आगोको ज्योति देख्दछन् ।

**शारीरिक लक्षण** : शरीर सुकुमार तथा गोरो वर्णको हुन्छ, शरीर र बल मध्यम हुन्छ, शरीरका अंग, मांशपेशी तथा जोर्नीहरु शिथिल हुन्छन् । जिब्रो, नाक, मुख, हात, गोडा ताम्र वर्णका हुन्छन्, कपाल तथा रौँ अल्प हुन्छ, केश चाँडै पाक्ने, कपाल झर्ने हुन्छ । भोक, प्यास अधिक लाग्दछ । शरीर अधिक ऊष्ण रहन्छ । त्यसैले तातो सहन सक्दैन, शीतल वस्तुहरुको इच्छा गर्ने हुन्छ । मैथुन शक्ति कम हुन्छ । छालामा फोका, बिमिरा, पिलो, खटिरा तथा पिडिका, कोठी धेरै हुन्छन् ।

**मानसिक लक्षण** : यसप्रकारका मानिस तीक्ष्ण स्वभावका हुन्छन् । चाँडै क्रोधित हुने र चाँडै शान्त हुन्छन् । शृंगारप्रिय, वीर, साहसी, बुद्धिमान्, मेधावी, उत्तम धारणशक्तिसम्पन्न, कुशाग्र बुद्धि, तेजस्वी, भयरहित, प्रतिवादीको खण्डन गरेर बोल्ने, आफूमा आश्रितहरुलाई सान्त्वना दिने, प्रेम गर्ने, उत्तम चरित्रवान् हुन्छन् । साथै ईर्ष्यालु पनि हुन्छन् । सपनामा अग्निदाह, उल्कापात, बिजुली, सूर्य, अग्नि, स्वर्ण, पलास आदि देख्दछन् ।

त्यसैले यस प्रकृतिका मानिसले शीत वीर्य भएका खाद्य पदार्थहरु जस्तैः चन्दन, घ्यू, तक्र आदिको सेवन गर्ने, नियमित स्नान गर्ने, बिहान हिँड्ने (morning walk), वन विहार, चङ्क्रमण (Movement) गर्ने, शरीरमा चन्दनको लेप लगाउने, बढी क्रोध, ईर्ष्या नगर्ने, आफूलाई संयम राख्ने आदि गर्नुपर्दछ ।

**कफ प्रकृति मानिसको लक्षण :**

**गम्भीरबुद्धिः स्थूलाङ्गः स्निग्धकेशो महाबलः ।**

**स्वप्ने जलाशयालोकी श्लेष्मप्रकृतिको नरः ॥**

**– शा.पू.७/२२**

कफ प्रकृतिका मानिस गम्भीर बुद्धि, ठूलो शरीर, चिल्लो कपाल, अति बलवान् तथा सपनामा जलाशयहरु देख्ने खालका हुन्छन् । सुश्रुत संहितानुसार यस प्रकृतिका मानिस ब्रह्मा, रुद्र, इन्द्र, वरुण, सिँह, हात्ती, गाई, साँढे, गरुड, घोडा, र हाँस समान गम्भीर स्वभाव भएका हुन्छन् ।

**शारीरिक लक्षण** : शरीर सुन्दर, सुडोल तथा सुविभक्त हुन्छ, अङ्गहरु स्थिर, पुष्ट हुन्छन, हात लामा तथा गोला, वक्षस्थल पुष्ट एवं शिर उच्च हुन्छ । कमल, नीम पत्र, सुवर्ण धान्य आदि समान वर्णका हुन्छन् । अनुहारमा प्रसन्नता छाइरहन्छ, कपाल कालो र चमकदार हुन्छ । हिँडाइ सारयुक्त, दृढ तथा स्थिर हात्तीको समान हुन्छ । स्वर मेघ, मृदंग, समुद्र तथा सिँहसमान गम्भीर हुन्छ । अत्यधिक वीर्यवान्, मैथुनशक्ति सम्पन्न हुन्छन् । शरीरमा अत्यन्त अल्प विकार हुन्छ ।

**मानसिक लक्षण** : सात्त्विक चित्त भएका, सत्यवादी, धर्मात्मा, स्मृतिवान्, स्थिर स्वभाव भएको, मन तथा वचन प्रवृत्तिमा शीघ्रता नगर्ने । कृतज्ञ, क्षोभ नगर्ने, वीर, सहनशील, ओजस्वी, शान्त, दीर्घायु, निर्लोभी तथा धनवान् हुन्छन् । मित्रता तथा शत्रुतालाई स्थिर राख्ने, सोचविचार गरेर कार्य गर्ने, आदरणीय व्यक्तिलाई सम्मान गर्ने, सधैँ निश्चित कुरा मात्र बोल्ने, भोक, प्यास, दुःख, क्लेश सहने, क्रोध, ईर्ष्या, चेष्टा र आहार अल्प गर्ने, दीर्घदर्शी, लज्जायुक्त, ऐश्वर्यवान् हुन्छन् । सपनामा कमल एवं पक्षीयुक्त जलाशय एवं बादल आदि देख्दछन् ।

यस प्रकारका मानिसले तीतो, पिरो, टर्रो स्वाद भएका खाद्य पदार्थहरु धेरै खानुपर्दछ । निद्रा कम गर्नुपर्दछ, योग तथा व्यायाम नियमित गर्नुपर्दछ ।

**द्वन्द्वज तथा समप्रकृति मानिसको लक्षण :**

द्वन्द्वज प्रकृतिको मानिसमा माथि उल्लिखित वात, पित्त र कफ प्रकृतिहरुका मिश्रित लक्षणहरु पाइन्छन् । जस्तै शरीर सुन्दर, मोटो, अनुहार, कपाल चिल्लो छ तर बोली व्यवहारमा संयमता छैन, द्वेषी, अदृढ, अधैर्य आदि छ भने त्यस्ता व्यक्तिहरु वात-कफ द्वन्द्वज प्रकृतिका हुन्छन् । यस्तो द्वन्द्वज प्रकृति निन्दनीय मानिन्छ । सम प्रकृतिको मानिसमा माथिका तीनै प्रकृतिहरुका उत्तम-उत्तम लक्षणहरु पाइन्छन् ।

मानिसको प्रकृति धेरै कुराहरुमा भर पर्दछ । ती सबै यहाँ उल्लेख गर्न संभव छैन तर पनि केही मुख्य अंश मात्र प्रस्तुत गरिएको छ जसबाट जो कोहीले पनि एउटा खाका थाहा पाउन सक्दछ । प्रत्येक प्रकृतिको व्यक्तिका लागि आहार-विहार, व्यायाम आदिको नियम फरक-फरक हुने गर्दछ । आयुर्वेद चिकित्सा कर्मका क्रममा पनि प्रकृति हेरेर उपचार गर्ने गरिन्छ । मानिसको प्रकृति अर्थात् शारीरिक बनावट, उसको बोलीचाली आदि मानसिक स्थिति आदिको आधारमा पनि उसमा लाग्न सक्ने रोगहरु, लागेका रोगमा हुन सक्ने उपद्रवहरु, उसका लागि सात्म्य आहार र औषध द्रव्य आदि थाहा पाउन सकिन्छ । त्यसैले कुशल आयुर्वेद चिकित्सकको सल्लाह लिएर आफ्नो प्रकृतिअनुसारको आहार, विहार र व्यवहार गर्न सकेमा प्रत्येक व्यक्ति आफूमा लाग्न सक्ने सम्भावित रोगहरुबाट सजिलै बच्न सक्दछ । जय गुरुदेव !

**बूढी औंला**

बूढी औंलाबाट पनि व्यक्तिको बारेमा धेरै जान्न सकिन्छ । यसका बारेमा पनि यहाँ संक्षिप्तरूपमा प्रकाश पारिन्छ ।

१. लामो बूढी औंला :- यस्तो व्यक्ति स्वेच्छाचारी, आत्मनिर्भर तथा अरुमाथि आफ्नो अधिकार राख्ने हुन्छ । यस्तो व्यक्तिको जीवनमा भावनाको अपेक्षा बुद्धि धेरै हुन्छ र एक प्रकारबाट यस्तो व्यक्तिलाई बुद्धिजीवी पनि मानिन्छ । गणित, इञ्जिनियरिङ्ग आदि कार्यहरुमा यस्तो व्यक्तिको विशेष रुचि रहन्छ ।

२. सानो बूढी औंला :- यस्तो व्यक्ति आफ्नो बुद्धिबाट कम काम लिन्छ तर अरुबाट प्रभावित भएर कार्य गर्दछ । यस्तो व्यक्तिको जीवनमा बुद्धिको अपेक्षा भावनाको बाहुल्यता रहन्छ । काव्य, चित्रकला, संगीत आदिमा यस्तो व्यक्तिको विशेष रुचि हुन्छ ।

३. कडा बूढी औंला :- यस्तो व्यक्ति हठी र सतर्क हुन्छ । कुनै पनि कुरालाई गोप्य राख्न सक्ने हुन्छ । यस्तो व्यक्तिको जीवनमा भावुकताको अभाव हुन्छ तथा बुद्धिको बलमा नै यस्तो व्यक्ति संचालित रहन्छ ।

४. लचिलो बूढी औंला :- जुन व्यक्तिको हातमा यस्तो बूढी औंला हुन्छ, त्यो व्यक्ति धनको संग्रह गर्नमा विशेष रुचि राख्दछ तथा परिस्थितिअनुसार आफूलाई ढाल्ने क्षमता राख्दछ ।

५. पहिलो पर्व :- यदि बूढी औंलाको पहिलो पर्व अधिक लामो छ भने त्यो व्यक्ति निरंकुश हुन्छ तर यो पर्व छोटो भएमा उसमा विशेष कार्य गर्ने इच्छा कम हुन्छ । यस्तो व्यक्ति दुर्बल इच्छाशक्ति भएको हुन्छ । यदि बूढी औंलाको अगाडिको भाग वर्गाकार छ भने व्यक्ति न्यायको कार्यमा चतुर हुन्छ तथा आफ्नो न्यायशीलताको कारण समाजमा आदरणीय स्थान प्राप्त गर्दछ । यदि बूढी औंलाको अगाडिको भाग चौडा छ भने व्यक्ति जरुरतभन्दा धेरै हठी हुन्छ र हठको कारणबाट नै जीवनमा कैयौं पटक नोक्सान व्यहोर्दछ । यदि बूढी औंलाको पहिलो पर्व असाधारण रूपले लामो छ भने यस्तो व्यक्ति हत्यारा, डाँकू वा समाजविरोधी कार्यमा संलग्न रहन्छ ।

६. दोस्रो पर्व :- यदि यो पर्व लामो छ भने यस्तो व्यक्ति चतुर, सावधान तथा समाजको कार्यमा निकै भाग लिने हुन्छ । आफ्नो कार्यबाट यस्तो व्यक्ति समाजमा सम्माननीय स्थान प्राप्त गर्दछ । यदि यो पर्व छोटो छ भने व्यक्ति बिनासोच काम गर्दछ र काममा असफल भएपछि बारम्बार पछुतो मान्दछ । जोखिमपूर्ण कार्यहरुमा यस्तो व्यक्ति निकै भाग लिन्छ । यदि यो पर्व भद्दा छ भने उसमा तर्क शक्तिको अभाव हुन्छ । यदि यो पर्व धसिएको देखिन्छ भने यस्तो व्यक्तिको मस्तिष्क अत्यन्त तीव्र एवं सम्वेदनशील हुन्छ ।

**पर्वत**

हातको अध्ययन गर्दा त्यसमा पाइने पर्वतहरुको विशेष महत्त्व हुन्छ किनकि पर्वतहरुको माध्यमबाट नै विभिन्न रेखाहरु बन्दछन् र तिनको विकास हुन जान्छ । पर्वतहरुको नामाकरण ग्रहहरुको नामाकरणबाट भएको हो र जुन ग्रहमा जे गुण विशेष रूपमा हुन्छ, त्यही गुण ती पर्वतहरुको उभारबाट ज्ञात गरिन्छ । उदाहरणार्थ सूर्य सम्मान, प्रसिद्धि, यश आदिको कारक ग्रह हो । अत: यदि हातमा सूर्य पर्वत विकसित छ भने निश्चय नै त्यस व्यक्तिलाई विशेष सम्मान तथा आदर मिल्दछ, तर यदि हातमा सूर्य पर्वतको विकास भएको छैन भने त्यो व्यक्ति जति नै उच्च तहमा पुगे पनि उसलाई वाञ्छनीय सम्मान तथा ख्याति प्राप्त हुँदैन ।

अनुभवमा पाइएको छ कि यदि जन्मकुण्डलीमा कुनै ग्रह विशेष बलवान छ भने त्यो ग्रह हातमा पनि बलवान् देखिन्छ अर्थात् त्यसको पर्वत विकसित, स्पष्ट एवं सुघड हुन्छ । एक प्रकारले हेर्ने हो भने हातका पर्वतहरुमा र जन्मकुण्डलीको ग्रहहरुमा कुनै प्रकारको पनि विशेष अन्तर हुँदैन । त्यसैले भनिन्छ कि हातको रेखा तथा पर्वतहरुको अध्ययन गरेर व्यक्तिको जन्मकुण्डली बनाउन सकिन्छ ।

**पर्वतका तीन भेद पाइन्छन् :-**

१. सामान्य पर्वत २. विकसित पर्वत ३. अविकसित पर्वत ।

यदि हातमा पर्वत धेरै मात्रामा उठेको छ भने, मासु स्वस्थ र लालिमायुक्त छ भने त्यसलाई विकसित मानिन्छ । यसको विपरित अविकसित पर्वत सामान्यत: देखिंदैन । सामान्य पर्वत त्यसलाई भनिन्छ जुन न अविकसित श्रेणीमा आउँछ, न त जसलाई पूर्णत: विकसित नै मान्न सकिन्छ ।

ग्रह र यसका अंग्रेजी नाम तथा सम्बन्धित प्रभावहरुको परिचय निम्न प्रकार छ :-

१. वृहस्पति पर्वत: यसलाई अंग्रेजीमा 'जुपिटर' भनिन्छ । यो सौम्य ग्रह मानिन्छ तथा यो पर्वत राज्य सेवा, इच्छाहरुको प्रदर्शन आदिसँग सम्बन्धित रहन्छ ।

२. शनि पर्वत: अंग्रेजीमा यसलाई 'सेटर्न' भनिन्छ । यो मननशीलता, एकान्तप्रियता, रोग, चिन्ता, मेशिनसम्बन्धी र व्यापार आदिसँग सम्बन्धित छ ।

३. सूर्य पर्वत: यसलाई अंग्रेजीमा 'सन' भनिन्छ । यसको माध्यमबाट राज्य, मानसिक उन्नति, प्रसिद्धि, सम्मान, यश तथा विविध कला-कौशलको अध्ययन गर्न सकिन्छ ।

४. बुध पर्वत: यसलाई अंग्रेजीमा 'मरकरी' भनिन्छ । वैज्ञानिक उन्नति, व्यापार गणितसम्बन्धी कार्य आदि तथ्यहरुको अध्ययन यसै ग्रहको माध्यमबाट गर्न सकिन्छ ।

५. हर्षल पर्वत: यो नाम अंग्रेजीबाट लिइएको हो । हिन्दीमा यसलाई 'प्रजापति' भनिन्छ । यसको सम्बन्ध शारीरिक क्षमताहरुसँग हुन्छ ।

६. नेपच्युन पर्वत: यसलाई वरुण ग्रह तथा अंग्रेजीमा 'नेपच्युन' भनिन्छ । व्यक्तिको विद्वता, उसको व्यक्तित्व, अरुमाथि उसको प्रभाव तथा उसको पुरुषार्थ आदि यसै पर्वतको माध्यमबाट जान्न सकिन्छ ।

७. चन्द्र पर्वत: यसलाई अंग्रेजीमा 'मून' भनिन्छ । हातमा यस पर्वतको माध्यमबाट कल्पना, विशालता, सहृदयता, मानसिक उत्थान तथा समुद्रपारीका यात्राहरुको अध्ययन गर्न सकिनछ ।

८. शुक्र पर्वत: अंग्रेजीमा यस ग्रहलाई 'भेनस' भनिन्छ । सुन्दरता, प्रेम, शान-शौकत तथा ऐश्वर्य-भोग आदिको सम्बन्ध यसै ग्रहसँग छ ।

९. मंगल पर्वत: यसलाई अंग्रेजीमा 'मार्स' नामबाट जानिन्छ । युद्ध, एकोहोरोपन, शक्ति, परिश्रम, पुरुषोचित गुण आदिको अध्ययन यस ग्रहको माध्यमबाट गरिन्छ ।

१०. राहु पर्वत: यसको अंग्रेजी नाम 'ड्रेगन्स हेड' हो । आकस्मिक धन प्राप्ति, चिठ्ठा, हृदयाघात वा अचानक रूपमा घटित हुने घटनाहरुको सम्बन्ध यसै ग्रहमा छ ।

११. केतु पर्वत: यसलाई अंग्रेजीमा 'ड्रेगन्स टेल' भनिन्छ । हातमा यसको उपस्थितिले धन, भौतिक उन्नति एवं बैंक ब्यालेन्स आदिको अध्ययन गर्न सकिन्छ ।

१२. प्लुटो पर्वत: यसलाई अंग्रेजीमा 'प्लुटो' तथा इन्द्रको नामबाट पुकारिन्छ । मानसिक चिन्ता तथा आध्यात्मिक उन्नतिको बारेमा यस ग्रहको माध्यमबाट जान्न सकिन्छ । क्रमश:

जय गुरुदेव !

# देवसंस्कार

**आत्मीय पाठकवृन्द, धेरै पाठकहरूको विशेष अनुरोधमा हामीले 'डायरी' स्तम्भलाई पुनः प्रकाशित गरेका छौँ। कोरा सैद्धान्तिक व्याख्याभन्दा प्रयोगात्मकरूपमा एकजना साधकले भोगेका अनुभवहरूलाई यहाँ जस्ताको तस्तै उतारिएको छ। यसको मौलिकतालाई कायम राख्दै साधकको व्यक्तिगत पृष्ठभूमि एवं परिचयलाई भन्दा रोचक एवं आवश्यक प्रसङ्गहरूलाई मात्र यसमा समावेश गरिएको छ। यसका बाँकी अंशहरूलाई धारावाहिकरूपमा क्रमशः प्रस्तुत गर्दै लगिनेछ।**

...क्षणभरमा कोही पनि हुनुभएन। सबैजना (दिव्यात्माहरु) अलप हुनुभयो। मेरो पितृगुरुदेव पनि अलप भइसक्नुभएको थियो। गुरु स्मरणबाहेक अरु विकल्प केही पनि थिएन। म 'अमिरण' प्रक्रियामा केही बेरसम्म रहें। यो अमिरण प्रक्रिया भनेको आत्माले आफू अप्ठ्यारोमा परेको बेलामा प्रयोग गर्ने अभ्यास हो। यो एक प्रकारको ध्यानजस्तै हो भने पनि हुन्छ। यो प्रक्रियामा जानासाथ आत्माले कस्तो प्रकारको संकल्प गरेको छ वा धारणा गरेको छ, त्यसैअनुरूप सम्पर्क कायम गर्ने आत्मिक प्रविधि हो। यस प्रक्रियाबाट अभ्यास गर्नु केवल आत्मशरीरबाट मात्र सम्भव हुन्छ। स्थूल शरीरबाट चाहिँ यो क्रममा जान सकिँदैन।

यस प्रकारको प्रक्रियामा कसरी प्रवेश गर्ने, कसरी विचरण गर्ने, कसरी वार्तालाप गर्ने, कसरी समापन गर्ने भन्ने बारेमा पहिले नै गुरुदेवबाट अति सूक्ष्म तवरबाट कुनै दिव्यात्मामा भएको शक्तिलाई मेरो आत्मामा स्थापना गरिदिनु भएको थियो। यस्तो प्रकारको शक्ति प्राप्त गर्न जुन दिव्यात्मामार्फत उक्त विधि प्राप्त गर्ने हो सोही प्रकारका बानी-व्यवहार, संस्कार आदि हुनुपर्ने हुँदोरहेछ। परमपूज्य गुरुदेवले आफ्ना हजारौं, लाखौं प्रकारका शिष्यमा कस्तो गुणको विकास भएको हुँदोरहेछ अर्थात् कुन संस्कार हावी भएको छ त्यही प्रकारको ब्रह्माण्डीय शक्ति स्थापना गरिदिनु हुँदोरहेछ।

त्यसकारण एउटै शक्ति धेरै व्यक्तिलाई अर्थात् शिष्यगणलाई उहाँले (परमपूज्य गुरुदेवले) चाहनु भएर पनि स्थापना गर्न नमिल्ने हुँदोरहेछ। यस्तो अवस्थामा उहाँले केही समय शिष्यलाई साधनामा अर्थात् तपस्यामा लगाउनु हुँदोरहेछ। त्यही अवस्थामा शिष्यलाई संस्कार रूप प्रवेश गराउनु हुँदोरहेछ। अनि मात्र शिष्यले चाहेको वा इच्छा गरेको शक्ति, सिद्धि प्रदान गर्नु हुँदोरहेछ। बिना संस्कार केही पनि प्राप्ति हुँदो रहेनछ। विभिन्न प्रकारका साधनाहरु, ध्यानका विधिहरु किन चाहियो ? कुनै एउटा विधिबाट अभ्यास गरे पुगिहाल्छ नि भन्ने मेरो शुरुको मान्यता यहाँ आएर असफल सावित भयो। ब्रह्माण्डमा हजारौं, लाखौं प्रकारका दिव्य शक्तिहरु विद्यमान छन्। ती शक्ति प्राप्त गर्न हामीमा हजारौं प्रकारका वा लाखौं प्रकारका संस्कारको जरुरत पर्ने रहेछ। उक्त संस्कार बसाल्नको लागि (स्थापित गर्नको लागि) अलग-अलग प्रकारका साधना, ध्यान गर्नुपर्ने हुँदोरहेछ।

यस्तो प्रकारको रहस्यमयी कुरा मैले यहाँ अएर बुझ्न पाउँदा हर्षले गर्वित छु। यस्ता सानाभन्दा साना कुरा पनि म यसकारणले उल्लेख गर्दैछु कि यहाँहरु सम्पूर्णलाई सानो कुरामा अड्किएर मजस्तो वर्षौंसम्म भट्किन नपरोस्। गुरुबाट सम्पूर्ण कुरा पाउन हामीमा पनि उहाँले निर्देशन गर्नुभएका प्रत्येक कुरालाई अक्षरश: पालना गरी व्यवहारमा उतार्न सक्ने गुणको विकास हुनुपर्ने हुँदोरहेछ। अन्यथा सफलता हासिल गर्न नसकिने रहेछ। बाहिरबाट हेर्दा मानवसत्ता छ। यही मानवसत्ताभित्र (मनुष्यलोकभित्र) हजारौं प्रकारका जातजाति, भेषभूषा, संस्कार आदि भएजस्तो। देवसत्ता वा देवलोक अनि ब्रह्माण्डको त कुरा नै पर राखौं व्याख्याभन्दा धेरै पर। मजस्तो तुच्छ जीवले कसरी ब्रह्माण्डको व्याख्या गर्न सक्तछु र जति पाएको छु अनुभव मात्र गर्न सकेको छु। गुरुबाट मेरो क्षमताअनुसार

जति लिन सकेको छु त्यही विषयहरु मात्र म बताउन सक्छु ।

मानव चोला यति अनमोल एवं बहुमूल्य यसकारणले रहेछ कि प्रत्येक आत्माले एउटा-एउटा विषय प्राप्त गर्दै प्रत्येकको अनुभवलाई एकै ठाउँमा मिसाएर हेर्न सकियो भने पूरै ब्रह्माण्डको व्याख्या पनि सम्भव हुन सक्ने सम्भावना रहेछ । जसले ब्रह्माण्डका बारेमा पूर्ण जान्दछ ऊ नै वास्तवमा पूर्ण हो । यी कुराहरु खोतल्दै जाँदा ब्रह्माण्डको गर्भमा पुग्न सकिन्छ । जब ब्रह्माण्डको गर्भमा पुगिन्छ, मातृस्वरूपको माध्यमबाट सबै कुरा थाहा पाउन सकिने प्रावधान हुँदोरहेछ । ब्रह्माण्डको भेद जान्नको लागि आफू ब्रह्माण्डमा प्रवेश गर्नुपर्ने हुँदोरहेछ । यसको लागि ब्रह्माण्ड भावरूपी गङ्गामा डुबुल्की मारिरहनु पर्ने रहेछ । सदैव ज्ञानरूपी गंगामा डुबिरहनु पर्ने हुँदोरहेछ ।

वास्तवमा भगवान् शिवको जटाबाट बगिरहने गंगा यही कुराको (ज्ञानको) प्रतीक रहेछ । प्रत्येक आत्माले यसरी नै सूक्ष्मरूपमा प्राप्त गर्दै जाँदा एकक्षण त्यो अवस्था आउने रहेछ कि उसले आफूलाई पनि शिवजस्तो ठान्दछ । वास्तवमा ऊ शिवको अंशरूपचाहिँ हुन पुग्दछ र अंशबाट पूर्णमा रूपान्तरण हुन्छ । अनि आफूलाई विसर्जित गरिदिन्छ । यो कुरालाई यहीं नै छोडी म अब अर्को प्रसंगमा जाँदैछु । जब म अमिरण प्रक्रियामा लागेँ, मैले गुरुसँग नै सम्पर्क कायम गर्ने निधो गरेँ । केही क्षणपश्चात् नै उहाँसँग (गुरुसँग) सम्पर्क भयो तर उहाँ अति सूक्ष्म रूपबाट मात्र संकल्परूपमा आउनुभयो । मैले मेरो सूक्ष्म घेरालाई अति सूक्ष्ममा ढाल्नु (बदल्नु) पर्ने भयो । म सोहीअनुसार प्रक्रियामा लागेँ । जब सूक्ष्म अस्तित्व विसर्जन गरिन्छ अनि अति सूक्ष्मको जन्म हुनेरहेछ । ब्रह्माण्डमा रहेर ब्रह्माण्डको भेद जान्न सकिँदो रहेनछ । मायारूपले ढाकिएको हुनाले मायारूपलाई हटाउनु पर्ने हुँदोरहेछ । त्यसैगरी सूक्ष्मको सम्पूर्ण कुरा थाहा पाउनको लागि अति सूक्ष्ममा रूपान्तरण हुनुपर्ने हुँदोरहेछ ।

जब म अति सूक्ष्ममा प्रवेश गरेँ परमपूज्य गुरुदेवसमक्ष नजिक हुने सुअवसर प्राप्त भयो । उहाँलाई साष्टाङ्ग दण्डवत् गरेँ । सूक्ष्म र अति सूक्ष्ममा हुने नीति, नियम र अनुशासनमा धेरै फरक पाइयो । गुरुसँग केही कुरा राख्न पाउनु भनेको अति नै दुर्लभ मानिँदो रहेछ । एक क्षणमा कैयौँ घटनाहरु निर्माण हुने रहेछन्, पालना हुने रहेछन् र नाश हुने रहेछन् । प्रत्येक काम, कुराको लागि उक्त सृष्टि-पालन-विनाशको नियमभित्र रहेर चल्नुपर्ने रहेछ । सृष्टिको क्रम चलिरहेको बेला सृष्टिसम्बन्धी काम कुराको पालो आउने रहेछ । पालनको क्रम चलिरहेको बेला पालनसम्बन्धी काम, कुराको पालो आउने रहेछ । विनाशको क्रम चलिरहेको बेला विनाशसम्बन्धी काम, कुराको पालो आउने रहेछ । मेरो क्रम सृष्टि क्रमसँग जोडिएको हुनाले त्यही क्रम नआउञ्जेल प्रतीक्षा गरेँ ।

जब पालो आयो मैले गुरुलाई देवलोक जानको लागि पितृगुरुदेवले सम्झाउनु भएको कुरा अवगत गराएँ । उहाँले टाउकोले संकेत गरी स्वीकृति प्रदान गर्नुभयो । देवलोक के हो ? कसरी त्यहाँ पुग्ने ? आदि जिज्ञासाले ममा (मभित्र) घर गरिरहेको थियो । म अचम्ममा परिरहेको थिएँ । अत्यन्त नौलो परिवेशमा रहेर पनि ममा कुनै प्रकारको भय थिएन । परमपूज्य गुरुदेवले सांकेतिकरूपमा सबै बताइरहनु भएको थियो । अब चाहिँ म देवलोक जान पाउने, गुरुको पूर्ण आशीर्वाद प्राप्त भइसकेको थियो । त्यसपछि गुरुलाई साष्टाङ्ग दण्डवत् गरी सूक्ष्म शरीरमा (सूक्ष्ममा) नै फिर्ता भएँ ।

म क्षणभर पनि त्यहाँ रहनु थिएन । तुरुन्त मैले गुरुले सिकाउनु भएको प्रक्रिया प्रारम्भ गरेँ । यो प्रक्रिया एक प्रकारको आवाहन प्रक्रिया नै थियो । तुरुन्त नै त्यहाँ बिजुली चम्केको जस्तो वातावरण हुन थाल्यो । एकछिनमा नै त्यहाँ मभन्दा माथिबाट एउटा लाम्चो खालको मण्डपजस्तो देखियो, त्यो अत्यन्तै सजिएको थियो, भित्रबाट आगोको ज्वाला बेला-बेलामा लप्का आएजस्तो हुने जसलाई बाहिरबाट स्पष्ट देख्न सकिन्छ । अनेकौँ प्रकारका सुगन्ध आइरहेका थिए । देख्दा अत्यन्त सिँगारिएको जस्तो लाग्ने अत्यन्त इच्छाशक्तिरूपले भरपूर मण्डप अर्थात् विमान (देव वस्तु) वा उपकरण मेरो सामु थपक्क बस्यो । दुई-जना दिव्यात्मा मसम्म आई जानको लागि अनुरोध गर्नुभयो, म क्षणभर पनि ढिला नगरी देव विमानमा प्रवेश गरेँ । कस्तो, कस्तो भइरहेको थियो । आनन्द आएजस्तो, खुशी आएजस्तो, रमाइलो लागेजस्तो भयो । विमान त्यसै क्षण माथि उड्न थाल्यो । हावाको वेगभन्दा पनि छिटोरूपमा उड्दै थियो । एक्कासी मलाई गाह्रो भए जस्तो, अप्ठ्यारो भए जस्तो भयो । हुन त म विमानभित्र नै थिएँ । तर पनि म आफै नै माथि (उकालो बाटो) हिँडिरहेको छु जस्तो लाग्यो । जसरी उकालो बाटो हिँड्दा गाह्रो हुन्छ, ठीक त्यस्तै गरी मलाई गाह्रो भयो । हुँदाहुँदा त मलाई छट्पटी हुन थाल्यो । प्राणशक्ति नै सङ्कटमा परेको जस्तो हुन थाल्यो । के भएको हो भन्ने बारेमा नै मैले बुझ्न सकिन । मसँग हुनुभएका दिव्यात्मासँग आफ्नो समस्या राखौँ कि नराखौँ भन्ने बारेमा नै दुविधामा परेँ । सम्भव भएसम्म भन्दिन भन्ने निधो गरेँ । मलाई झन् गाह्रोको मात्रा थपिँदै गएको जस्तो भान भयो । जुन कुरा मैले लुकाउन खोजिरहेको छु, त्यही कुरा मैले भन्नै पर्ने बाध्यता पर्न लागिसक्यो । अन्तमा मैले उहाँहरूसमक्ष आफ्नो समस्या राखेँ ।

तत्पश्चात् उहाँहरूमध्ये एकजनाले साङ्केतिकरूपमा मलाई वृत्तान्त उत्तर भनौँ वा समाधान दिनुभयो जसको लागि मैले केही समय देवलोकको यात्रालाई स्थगितजस्तो गर्नुपर्‍यो । कारण, मेरो स्थूल शरीरमा भएका अहंपन अर्थात् घमण्ड र अहङ्कारको अलिकति मात्राले पनि सूक्ष्म शरीरलाई धेरै धक्का पुग्दोरहेछ ।

उक्त घमण्ड र अहङ्कारको प्रभावबाट सूक्ष्म शरीरको तरङ्गमा फरक अवस्था आउने रहेछ। उक्त फरक रङ देवलोकको लागि निषेध हुँदोरहेछ। त्यसप्रकारको तरङ्ग रहुन्जेल सूक्ष्म शरीर माथि जान चाहेर पनि जानै नसक्ने हुँदोरहेछ। आफूले जम्मा गरेको फोहोर अरूले सफा गरिदिएर सफा हुँदो रहेनछ। स्वयंले नै सफा गर्नुपर्ने हुँदोरहेछ। उक्त खराब प्रवृत्ति जतिसुकै रूपबाट सचेत हुँदाहुँदै पनि आउँदोरहेछ जसको कारणबाट मैले मेरो सूक्ष्म यात्रामा उपलब्धि हासिल गर्ने बेलामा पुनः आफ्नो स्थूल शरीरमा फर्किएर आउनुपऱ्यो।

मेरो स्थूल शरीरको आनीबानीमा परिवर्तन नआएसम्म, निखार नआएसम्म मैले (सूक्ष्म शरीरले) धैर्यधारण गर्नुपर्ने भयो। म टुलुटुलु हेरेर बसिरहें, पर्खिरहें तर पनि मेरो स्थूल शरीरले केही पनि परिवर्तन गर्नुभएन आफ्नो आनीबानीमा। यस्तै क्रममा मेरो घण्टा बित्यो, दिन बित्यो, हप्ता बित्यो, महिना बित्यो। तर पनि मेरो शरीर (स्थूल शरीर) ले घमण्ड र अहंकारको अवस्थामा केही कमी ल्याउनुभएन। मैले मेरो देवलोकको यात्रा स्थगित गर्नुपरेको कारण बल्ल स्पष्टताका साथ थाहा पाएँ। मैले चाहेर पनि आनीबानीमा सुधार गर्न सकिन किनकि उहाँले आफूलाई फर्केर केलाउने फुर्सद नै निकाल्नुभएन। एउटा कामपछि अर्को काम अनि अर्को यसै गरी दिन बितिरहेको रहेछ। कार्य सफलताले गर्दा अत्यन्त उच्च प्रकारको भान भइरहँदो रहेछ।

आत्म चिन्तनमा बसेदेखि म केही सङ्केत गर्थें। मुश्किलले स्थूल रूपबाट दुई घण्टा निस्कँदो रहेछ, त्यस समयमा सम्बन्धित देवीदेवताले मौका छोप्ने हुँदा मैले पालो नै पाइन। यस्तो हुँदाहुँदै स्थूलरूपमा तीन महिना बित्यो। आखिर म सफल हुनु भनेको मेरो स्थूल शरीरकै सफलता थियो। तर मेरै शरीरले मलाई बिर्सेको देख्दा, चिन्तन गर्न नपाएको देख्दा म (आत्मा) साह्रै दुःखित भएँ। मैले अब केही गर्ने निधो गरें। शरीर अनायास नै बिरामी पऱ्यो। बिरामी यस्तो खालको भयो कि जसलाई केही किटान नै गर्न नसकिने। बिनाकारण बिरामी, शरीरमा थकावट, बेचैनी भएजस्तो। काममा दिग्दारी अनेक थरि के-के भयो के-के ! एकदिन सुतिरहेको बेला पारी मैले मेरो झलक दिन सफल भएँ। ब्यूँझनासाथ मेरो शरीर उठेर आत्म चिन्तनमा लाग्नुभयो। त्यसैबेला मैले वृत्तान्त बताएँ।

अब शरीर, मन, आत्मा जताततै मेरै चिन्तन लागू हुन थाल्यो। कत्ति पनि घमण्ड र अहंकार थिएन। मेरो स्थूल शरीरले आफूलाई एउटा मध्यस्थकर्ताको रूपमा स्थापित गर्नुभयो। अरू साथीभाइको विचारलाई सम्मान गर्ने, कसैलाई पनि नहोच्याउने आदि विभिन्न आनीबानीको विकास गर्नुभयो। मलाई साह्रै खुशी लाग्यो। अब मेरो रोकिएको यात्रा पुनः अगाडि बढ्ने भयो। प्रवृत्तिको विकास हुनासाथ चौबीस घण्टाको अन्तरालमा मेरो आत्मशरीरमा यस्तो प्रभाव पर्न थाल्यो कि अब मैले जे पनि प्राप्त गर्न सक्छु जस्तो लाग्यो। अब चाहिँ मेरो स्थूल शरीर मेरो सम्पर्क र मेरो अनुसार नै चल्न थाल्नुभयो। कार्य गराइमा गल्ती हुन लाग्दालाग्दै मैले आत्मसत्ताको माध्यमबाट चित्तवृत्तिमा तरङ्ग पठाइहाल्थें। उहाँ (स्थूल शरीर) ले याद गरिहाल्नु हुन्थ्यो र कार्य शुद्धि गराइहाल्नुहुन्थ्यो।

कर्मको शुद्धि, विचारको शुद्धि, सङ्गत शुद्धि आदिले गर्दा उहाँले जे गरे पनि, जे बोले पनि तपस्याकै रूप हुन थाल्यो। आत्माबिनाको शरीर र शरीरबिनाको आत्माको कुनै महत्त्व रहेनछ। ठीक यसै गरी असल चित्तवृत्तिबिनाको आत्माले केही प्राप्त गर्न सक्दो रहेनछ र आत्माबिनाको असल चित्तवृत्तिको पनि केही हुने रहेनछ। मैले आत्मिकरूपमा 'अमिरण प्रक्रिया'मा गई रोकिएको देवलोकको सूक्ष्म यात्रामा सम्पर्क कायम गर्न सफल भएँ। म उक्त दिव्य विमानमा जाँदाको क्षणमा मेरो स्थूल शरीरमा अलिकति अप्ठ्यारो महसुस भएको कुरा मैले स्पष्टताका साथ थाहा पाएँ। दिनभरि नै उहाँलाई शरीर अल्छी भए जस्तो, निद्रा लागे जस्तो भयो।

उहाँलाई केही आभास मिलोस् भनेर निद्रामा गएको बखत पारी चित्तवृत्तिको माध्यमबाट स्वप्नरूपी आकाशगङ्गामा उहाँ (स्थूल शरीर) लाई उडाएर माथि-माथि ल्याइयो र विभिन्न कुराको ज्ञान एवं भोग गराइयो ताकि उहाँलाई केही जोश, जाँगर थपियोस्। हाम्रो (मेरो) दिव्य विमान माथि-माथि उड्दै गयो। जाँदा-जाँदा यस्तो रमणीय दृश्य आयो कि जसको मसँग यहाँ कलमको माध्यमबाट अभिव्यक्त गर्ने शब्द नै छैन। उक्त आकाश गङ्गाको कुनै भागमा केवल अनुभव मात्र गर्न सकिँदो रहेछ। यस्तो आवरणले भरपूर इलाकामा हाम्रो दिव्य विमान प्रवेश गर्नासाथ नै शक्तिले स्वतः नै भरपूर हुने रहेछ। माग्न नै नपर्ने, लिन नै नपर्ने, स्वतः नै आर्जन हुने ठाउँ रहेछ। चाहेर पनि यस्तो ठाउँमा धेरै समय रहन सकिँदो रहेनछ।

विमानको आफ्नै गतिले गर्दा उक्त ठाउँ नाघि सकिएछ। कुन आत्मा कति पवित्र छ, त्यही आधारमा प्राप्त गर्ने रहेछ। जत्ति माथि गयो उत्तिकै दिव्यतम ठाउँ देखा पर्न थाल्यो। यस्तो कुराको वर्णन केवल म ठूलो बन्नको लागि गरेको होइन। साधनामा लागेका, ध्यानमा लागेका साधक साधिकालाई प्रेरणाको स्रोत बनोस्, केही मद्दत पुगोस् भनेर र केवल गुरु आदेशको पालनाको लागि यी कुराहरूको व्याख्या गरिरहेको छु। नत्र भने त यसरी अनुभव प्रकाशनमा ल्याउनु पनि घमण्डको प्रदर्शन नै हो। त्यसकारण नै नाम प्रकाशमा नआएको हो। आत्माको लागि मान-सम्मान प्राप्त गर्नु खस्कनु हो भने आफ्नो कार्यले

अरूलाई टेवा पुऱ्याएको छ, हित गरेको छ, गुरु-शिष्यमा जोश, जाँगर भरेको छ भने त्यो नै आत्माको लागि उच्चतम अवस्था प्राप्ति हो । यसैलाई आत्मपद प्राप्ति भनिन्छ ।

हाम्रो विमान अन्तरिक्षबाट धेरै माथि गयो जहाँबाट मनुष्य समाजको, जातिको केवल आत्मवृत्तिको माध्यमबाट अनुभव गर्न सकिन्थ्यो, त्यस्तो ठाउँमा गएर रोकियो प्रत्येक ठाउँ दिव्यतम थिए । त्यहाँ केवल सिद्धि र शक्तिले काम गर्दथे । देवलोकमा प्रवेश गर्नासाथ पुष्पवृष्टिको माध्यमबाट स्वागत गरियो । जसरी पाहुनाको स्वागत गरिन्छ ठीक त्यसै गरी मेरो स्वागत भयो । मैले नम्रतापूर्वक हात जोडेको जोड्यै गरिराखेँ । अनायास नै मैले मेरी इष्टदेवी (माता) लाई स्मरण गर्न पुगेछु । उहाँको आह्वान गर्न पुगेछु । आह्वान गर्दागर्दै हर्षस्वरूप रुन थालेछु । माता प्रकट भएर आशीर्वाद दिनुभयो र मलाई आफ्नो काखमा राख्नुभयो ।

उहाँको स्वरूप यति विराट् थियो जसको व्याख्या यहाँ गर्दा अपत्यारिलो पनि लाग्न सक्छ । मतलब म साह्रै सानो थिएँ । म यहाँ इष्टदेवी माताको नाम उल्लेख गर्न चाहन्न । उहाँ (माता) साह्रै खुशी हुनुभयो । माताहरू त्यति व्याकुल हुनुहुँदो रहेछ प्रत्येक आत्मा देवलोक आओस् भनेर । उहाँले आफ्नो आश्रममा मलाई लान (लैजान) लाग्नुभयो । जब हामी (माता र म) माताको इच्छित ठाउँमा पुग्यौँ, माताले यसो के आह्वानजस्तो गर्नुभयो । त्यहाँ त अर्कै देवीजस्तो प्रकट हुनुभयो । माताले उक्त देवीलाई सम्बोधन गर्दै भन्नुभयो– "मेरो भक्तलाई देवसंस्कार प्रदान गर्नू र मसमक्ष ल्याउनू ।" देवीले जब जिम्मा पाउनुभयो, मलाई लिएर अर्कै ठाउँमा जानको लागि सङ्केत गर्नुभयो । त्यहाँको नियम भनौँ वा विधान विचित्रको लाग्यो मलाई । प्रत्येकपटक जे-जे काम पर्दछ, त्यही कार्यको लागि आवश्यक कुन-कुन पक्ष हुन्, त्यही पक्षलाई आह्वान जस्तो, के हो, सांकेतिक रूपमा गरिँदो रहेछ । तुरुन्त त्यहाँ प्रकट हुँदा रहेछन् र कार्य सम्पन्न भइसकेपछि आफ्नै स्थान विशेषमा पुग्दा रहेछन् । यस रूपबाट हेर्दा र आँकलन गर्दा देवलोक भनौँ या देवीलोक भनौँ, कति विराट् छ भन्ने बारेमा खासै भन्न नसकिने अवस्था रहेछ । स्वतन्त्र रूपबाट जता मन लाग्यो त्यतै जान नमिल्ने रहेछ । जे कुराको लागि, कामको लागि पनि मात्रा हुँदोरहेछ, सोहीअनुसार चल्नुपर्ने हुँदोरहेछ । बिनाकारण, बिनाप्रयोजन आफ्नो शक्ति प्रदर्शन गर्न नपाइने हुँदोरहेछ, भन्न नपाइने हुँदोरहेछ । सिद्धिको प्रभावचाहिँ पर्दोरहेछ तर प्रत्येक शक्ति आफ्नो-आफ्नो दायरामा रहेर कार्य गर्दा रहेछन् ।

मेरी इष्टदेवी (माता) ले अह्राउनुभएकी देवीले एउटा ॐ जस्तो आकृति आह्वान गर्नुभयो । त्यो आकृति ॐ जस्तो थियो तर त्यो ॐ चाहिँ होइन । उक्त आकृतिको बारेमा म सबै कुरा बुझ्न सक्ने भए पनि यहाँ व्याख्या गर्न मलाई गाह्रो भइरहेको छ तर प्रभाव क्षेत्र चाहिँ ॐ कै जस्तो थियो । आह्वानपश्चात् त्यहाँ एउटा रथजस्तो प्रकट भयो । हामी (देवी र म) स्वतः नै रथमा आफै सिद्ध रूपमा गयौँ । मलाई अनायास नै उक्त देवीलाई दायाँ तथा अगाडिपट्टि पार्न मन (इच्छा वा आभास) लाग्यो । मैले त्यसै गरेँ । उक्त देवी अत्यन्त खुशी देखिनुभयो । यसबाट मैले थाहा पाएँ कि उहाँ (देवी) लाई मैले सम्मान गर्दा विशेष रूपमा राम्रै गरेँ जस्तो लाग्यो ।

यो रथबाट गइरहेको जस्तो भान हुन्थ्यो तर बाह्यरूपमा केही पनि पहिचान गर्न सकिँदैनथ्यो । एउटा यस्तो स्थान आइपुग्यो जुन सर्वथा नौलो थियो । यसप्रकारको स्थान अत्यन्त विचित्र खालको थियो । हाम्रो रथ स्वतः नै अडियो (रोकियो) । हामी स्वतः नै बाहिर निस्कियौँ । यहाँ निस्कनुको अर्थ कुनै शक्तिले खिचेर बिनापरिश्रम बाहिर आफै आएको भनिएको हो । जब हामी बाहिर आयौँ, उक्त रथ स्वतः नै विलीन भयो । त्यहाँबाट धेरै नै परजस्तोमा एउटा दृष्य देखियो जसरी एउटा डाँडाबाट अर्को डाँडामा हेर्दा स्पष्टरूपमा त्यहाँको दृश्य पनि नदेखिने तर केही अस्पष्ट रूपमा देखेर अन्दाज लगाउन सकिने अवस्था हुन्छ । केही न केही रूपमा डाँडाको अवलोकनपश्चात् एउटा भावना मनमा उठ्छ । लगभग त्यसै गरी मेरो सूक्ष्म शरीरमा पनि त्यस्तै प्रकारका तरङ्गहरू उब्जिन थाले ।

वास्तवमा हामी (देवी र म) त्यहाँ नै जानुपर्ने रहेछ । देव-देवी प्रभाव क्षेत्र भनेको यस्तो हुने रहेछ कि त्यहाँ मन्त्रहरूले सजिलैसँग कार्य गर्न सक्ने, गराउन सक्ने अवस्था हुँदोरहेछ । देवीले एउटा के सङ्केत गर्नुभयो, स्वतः नै हामी उड्यौँ वा शरीर सरर हावामा स-साना कणहरूलाई उडाएर लगेको जस्तै भयो । एकैछिनमा नै हामी उक्त गन्तव्य (ठाउँ) मा पुग्यौँ । अति अचम्मको ठाउँ रहेछ । टाढाबाट डाँडाजस्तो देखिए पनि उक्त ठाउँ त सम्म (समथर) नै थियो । अन्तरिक्षभन्दा धेरै माथिको ठाउँ शून्यता नै हो तर पनि त्यहाँ तुरुन्त नै बस्ने स्थल निर्माण हुन्थ्यो । एक किसिमले भन्नुपर्दा कल्पवृक्षजस्तै कल्पस्थल लाग्यो मलाई । निर्माण, पालन र विनाशको प्रक्रिया क्षण-क्षणमा नै भइरहेको थियो ।

केही क्षण हामी त्यहाँ तटस्थरूपमा रहिरह्यौँ । के कारणले हामी प्रतीक्षा गरिरहेका छौँ, मलाई थाहा नै भएन । अनायास नै त्यहाँ एउटा विराट् यन्त्रको आविष्कार भयो अर्थात् सृष्टि भयो । हेर्दाहेर्दै उक्त यन्त्रमा अङ्कित सङ्केतहरूले स्वतः नै वरिपरिको क्षेत्रलाई प्रभाव पार्न थाल्यो । उक्त यन्त्रलाई परिक्रमा गर्ने जस्तो गरी सहायक यन्त्रहरू एउटा-एउटा गरेर प्रकट हुँदै मुख्य यन्त्रभित्र प्रवेश गर्न थाले । यन्त्र स्वयं पनि सजीव रूपमा कार्य गरिरहेका थिए । जब सबै सहायक यन्त्रहरू मुख्य यन्त्रमा विसर्जित भए, उक्त महायन्त्र (मुख्य यन्त्र) बाट ध्वनि निस्कन

थाल्यो । केही शब्दध्वनि निस्किए जसको अर्थ, परिभाषा मैले केही पनि बुझ्न सकिन । जब त्यहाँबाट ध्वनिहरू निस्कन छोडे उक्त महायन्त्र (मुख्य यन्त्र) प्रकट हुने, एक क्षण चहकिलो भएर रहने र अन्तमा हराउने हुन थाल्यो । जब त्यस्तो हुन थालेको मात्र के थियो त्यहाँ त मजस्तै अन्य व्यक्तिहरू धेरै नै देखा पर्न थाले । उक्त महायन्त्र प्रकट भएर स्थिर रहेको बेला अर्थात् पालनको अवस्थामा प्रत्येक सूक्ष्म शरीर उक्त महायन्त्रमा प्रवेश गर्नुपर्ने हुँदोरहेछ । त्यहाँ एक-एक गरेर व्यक्तिहरू प्रवेश गर्न थाले । यस्तो क्रममा कोही प्रवेश गरेपछि त्यही नै हराए भने कोही व्यक्ति त्यहाँ प्रवेश गर्न नसकेर विस्थापित भए अर्थात् बाहिर निस्किए । अर्थात् महायन्त्रमा स्वीकार र अस्वीकार दुवै प्रक्रिया भइरहेको थियो । आगोमा वा बत्तीमा पुतली होमिएको जस्तो गरी एक-एक होमिन थाले । मलाई जिज्ञासा प्रकट भयो, उक्त महायन्त्रमा विलीन हुनेहरू ठीक हुन् कि विस्थापित हुनेहरू ठीक हुन् ? त्यहाँ सोचेर निर्णय गर्ने फुर्सद थिएन । साथै मैले जे सोचे पनि त्यसको कुनै औचित्य थिएन । कारण त्यहाँ जे सोचे पनि गएर होमिनुसिवाय अरू विकल्प थिएन । जुन कुराको केही औचित्य छैन, त्यस्ता कुरा सोच्नुभन्दा त गुरु चिन्तन गरेर आफ्नो पालो पर्खनु नै उचित हुनेछ भन्ने ठानेर सोही प्रक्रियामा आबद्ध भएँ ।

मेरो पालो आइसकेछ । जब महायन्त्र प्रकट भई पालनको प्रक्रियामा स्थिर हुनुभएको थियो, त्यही बेलामा म पनि होमिएँ । तर त्यहाँ म मात्रै थिइनँ, देवी हुनुहुन्नथ्यो । जब म महायन्त्रमा विसर्जित भएँ, म विस्थापित भइन । यसको सट्टामा म जब यन्त्रको स्पर्शमा पुगेँ, तुरुन्त भस्म भएँ । एउटा आवरण मात्र रह्यो । म नै रहिन । मेरो सूक्ष्म शरीर भस्म भयो । म यन्त्रभित्रको संसारमा पुगेँ । बाहिरको संसार र यन्त्रभित्रको संसार धेरै नै फरक थियो । मेरो शरीर नै थिएन । एउटा आवरण (तरङ्ग) जस्तो थियो । तर म हो कि अरू कोही हो ठम्याउन सकिन । म तरङ्गरूपमा रहन थालेँ । उक्त तरङ्ग समय-समयमा फेरबदल हुने रहेछ । आफ्नो भन्ने मेरो केही पनि थिएन । सूक्ष्म पनि रहेन । उक्त तरङ्ग नै म हुँ जस्तो लागेको मात्र रहेछ, त्यहाँ त मजस्तै हजारौँ सूक्ष्म शरीर विलीन भएर निर्माण भएको तरङ्ग रहेछ । थाहा नपाइकन हामी हजारौँ व्यक्ति एउटै रूपमा परिणत हुन पुगेछौँ ।

कति समय बित्यो थाहा भएन । हामी (हजारौँ) रङ्गीन तरङ्गमा रूपान्तरित हुन पुग्यौँ । उक्त रङ्ग गाढा रातोजस्तोभित्र हरियो थोप्लाजस्तो थियो । तर अचम्म ! उक्त रङ्गको आनन्द, खुशी, उत्साह, सृजनता जसको बारेमा यहाँ व्याख्या गर्न नै सकिँदैन । त्यस्तो प्रकारको रूपमा हामी धेरै नै कालसम्म रह्यौँ होला जस्तो लाग्यो । शायद निराकार सत्ता भनेको यही हो कि तर वास्तविक रूपमा चाहिँ भन्न सकिने अवस्था रहेन । अति सूक्ष्मको अवस्था भनेको लगभग यही हो कि जस्तो लाग्यो ।

मलाई कसैको पनि त्यति याद आएन । रहँदा-रहँदा आफ्नो तर्फबाट (हजारौँ) के दिन सकिन्छ, ब्रह्माण्डमा के दिन सकिन्छ भन्ने आभास मात्र हुन थाल्यो । यस्तो हुन थालेपछि स्वतः नै प्रभाव क्षेत्रको निर्माण हुन थाल्यो । त्यसपछि उक्त स्वरूप झन् शक्तिशाली भएजस्तो लाग्यो । त्यहाँबाट अत्यन्त जोडका साथ महायन्त्र विनाश प्रक्रिया हुँदा बाहिर आयौँ । जब हामी बाहिर आयौँ, स्वतः नै तरङ्ग हजारौँ शरीरमा विभक्त भयो । शुरुमा जो देवी हुनुहुन्थ्यो उहाँलाई पनि देखेँ, प्रणाम गरेँ । मलाई देखेर उहाँ खुशी हुनुभयो । कारण मेरो इष्टदेवी (माता) ले उहाँलाई “देव संस्कार प्रदान गर्नू र म समक्ष ल्याउनू” भन्नुभएको कुरा पूरा भएको रहेछ । वास्तवमा देवसंस्कार प्राप्त हुनु भनेको आफ्नो स्वरूपलाई मेटाएर अरूलाई केही दिन सक्ने हुनुपर्ने हुँदोरहेछ । जसको प्रभाव मनुष्य जीवनमा केवल चित्तवृत्तिमा पर्दोरहेछ । मानवजातिले देवसंस्कार प्राप्त गर्न केवल चित्तवृत्ति सफा गरे पुग्दोरहेछ । सिद्धि र शक्ति स्वतः नै मिल्ने रहेछ । जब म पूर्णरूपले निरूपण ... क्रमशः जय गुरुदेव !

# समवेदना

**जन्मः**
**२४ डिसेम्बर १९३०**

**स्वर्गारोहणः**
**२३ सेप्टेम्बर २००८**

**यस गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रमकी शैक्षिक परामर्शदाता श्रीमती भवानी शर्माका पिता श्री एम.एस. राजनको असामयिक निधनमा समवेदना व्यक्त गर्दै परमपूज्य सद्गुरुदेवहरूको चरणमा उहाँको चिर शान्तिको कामना गर्दछौँ ।**

**गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रम**

**परिवार**

# अनुभव
# अनूभुति

(सिद्धाश्रम शक्ति केन्द्रसँग आबद्ध भएर परमपूज्य सद्‌गुरुदेवहरूको कृपा, अनुकम्पास्वरूप साधक साधिकालगायत अन्य महानुभावहरूले आफ्ना जीवनमा पाउनुभएका विविध प्रकार र प्रकृतिका अनुभव/अनुभूतिहरू यस पत्रिकामा स्थायी स्तम्भअन्तर्गत प्रकाशित हुँदै आइरहेका छन्। सिद्धाश्रम शक्ति केन्द्रसँग जोडिएपछि यहाँहरूले सङ्गाल्ने सौभाग्य पाउनुभएको खण्डमा ती अनुभव/अनुभूतिहरूलाई पनि यस पत्रिकामा प्रकाशनार्थ उपलब्ध गराउन सक्नुहुनेछ, स्वीकृत भएमा मात्र छापिनेछ।)

## दिवंगत हजूरआमाको दर्शन

०६२ साल भाद्र २६ गतेको दिन थियो। गोरक्ष निखिल वाणी पढिरहेकी थिएँ। एक्कासी पत्रिकाको सबैभन्दा पछाडि छापिएको 'के तपाईं यीमध्ये कुनै समस्याबाट पीडित हुनुहुन्छ ?' मा मेरो आँखा पुग्यो। सम्पर्कका लागि ठेगाना पनि छापिएको थियो। म साह्रै खुशी भएँ। त्यसबेला मलाई साह्रै गाह्रो परिरहेको थियो, मेरा सबै काम बिग्रेका थिए र आँटेको काम पूरा भइरहेको थिएन। म बिरामी पनि थिएँ। मैले पत्र लेख्ने विचार गरेँ। पत्र लेखेर ०६२ साल भाद्र २६ गते हुलाकमा खसालेँ। त्यतिबेला मैले एकजना साधिका दिदी मात्रै चिनेकी थिएँ। उहाँले पत्रिका म कहाँ ल्याइदिनुहुन्थ्यो। मैले पत्रिका सदस्य बनाउनका लागि आफूलाई पत्रिका ल्याइदिन उहाँलाई आग्रह गरेँ। मैले एक वर्षसम्म पत्रिका घर घरमा पुऱ्याउने गुरुकार्य गरेँ। पत्रिकाको अध्ययनबाट मलाई आश्रम, गुरुहरुका बारेमा धेरै कुरा थाहा हुँदै गयो। एकदिन दिव्य गुरु महोत्सवमा कार्यक्रममा सहभागी हुने सौभाग्य प्राप्त भयो। दिव्य गुरु महोत्सवको कार्यक्रममा मलाई साह्रै आनन्द आएको थियो।

तीन महिनासम्म मेरो चिठ्ठीको उत्तर प्राप्त भएन। एकजना साधिका दिदीलाई सोध्दा धैर्य राख्ने सल्लाह पाएँ। उहाँले सद्‌गुरुदेवहरुले सूक्ष्मरूपले परिवारका अन्य सदस्यहरुलाई पनि दर्शन दिनुहुने सम्भावनाबारे बताउनुभयो। एकदिन (उक्त दिन बिहीबार थियो) मेरी कान्छी बुहारीलाई गुरुदेवले दर्शन दिनुभयो।

०६२ साल पौष महिनाको बिहीबारको दिन थियो। छोरा-बुहारी घरै थिए। छोराको काम अलि ढिलो भएको हुनाले ऊ बाहिर गएको थिएन। उक्त दिन राति २ बजेर १५ मिनेट जाँदा गुरुदेव घरमा आउनुभयो। उहाँले गेरु रङको कपडा लगाउनुभएको थियो। उहाँले एउटा हातमा त्रिशूल र अर्को हातमा कमण्डलु लिनुभएको थियो। ट्याक-ट्याकको आवाजका साथ भऱ्याङ चढेर गुरुदेव माथि आउनुभयो। भऱ्याङमाथि अडिएर मेरी कान्छी बुहारीलाई 'रिना, रिना' भनेर बोलाउनुभयो। बुहारीले 'हजूर' भनेर ढोका खोली बाहिर आई हेर्दा त गुरुदेवलाई देखिन्। गुरुदेवले 'के गाउँबाट तिम्री हजूरआमा आउनुभएको छ ?' भनेर सोध्नुभयो। बुहारीले 'आउनुभएको छैन' भनेर जवाफ दिइन्। गुरुदेवले भित्र गएर हेर्न भन्नुभयो। हजूरआमा त रिनाको कोठामा बसिरहनुभएको थियो। बुहारी दौडेर बाहिर आई हेर्दा गुरुदेव त्यहाँबाट अदृश्य भइसक्नुभएको थियो।

बुहारीकी हजूरआमा अर्थात् मेरी सासुआमा बितेको पन्ध्र वर्ष भइसकेको थियो। बुहारीलाई गुरुदेवले हजूरआमाको दर्शन गराइदिनु भयो। यी कुरा बुहारीले मलाई बताउँदा म हर्षले विभोर भएँ। मलाई थाहा भयो कि मेरो चिठ्ठीको जवाफ प्राप्त भइसक्यो। मैले गुरुदेवसँग क्षमा मागेँ, आश्रम गएर गुरु पादुकाको दर्शन गरेँ र त्यसबेला मनका सबै कुरा पादुकामा राखेँ। मेरा कामहरु विस्तारै-विस्तारै हुन लागे।

०६२ सालको सवा लाख रोट अर्पण कार्यक्रममा पोखराबाट हामी ११ जना एउटा जीप लिएर गोरखा गएका थियौँ। फर्कने क्रममा दमौलीमा आइपुग्दा दिउँसोको २ बजेको थियो। एकजना साथीले बेलैमा आइएको हुनाले छाब्दी वाराही जाने प्रस्ताव राख्यो। हामी त्यतातिर लाग्यौँ। बाटोमा डोजर लगाइँदै थियो। तर बाटो त्यति नराम्रो भने थिएन। फर्कंदा बाटोमा माटो हालेको रै'छ। हाम्रो जीप माटो राखेको ठाउँमा भासियो। सबै डराएर झर्नुभयो। म झर्न सकिरहेकी थिइन। गुरुदेवलाई सम्झेर बल्लतल्ल झरेँ। गाडीको अगाडि एउटा ठूलो ढुङ्गा थियो। त्यस ढुङ्गामा गएर हामी सबै बस्यौँ। हामीहरुले गुरुदेवलाई प्रार्थना गऱ्यौँ– 'हे गुरु गोरखनाथ, हामीलाई बचाउनुहोस्।' अगाडिबाट ५-७ जना केटाहरु आइरहेको देखियो। तिनीहरुले गाडिएको गाडीलाई उचाल्ने प्रयत्न गरे भने ड्राइभरले गाडी स्टार्ट गरे। तीन पटकसम्म 'जय गोरखनाथ बचाउनुहोस्' भनेर कराएर प्रार्थना गर्दा गाडी फुत्त माथि आयो र हामी पोखरा आयौँ। स्वास्थ्यको दृष्टिले अहिले म स्वस्थ छु।

म सबैलाई आह्वान गर्न चाहन्छु कि गुरुको शरणमा जान, आश्रममा धाउन उमेर बाधक छैन। बुढेलकाल आएपछि मात्रै गुरुको शरणमा पर्छु, आश्रम धाउँछु भन्नु खतरनाक छ किनकि कालले कसैलाई कुर्दैन। कालले त जवान, बच्चा, बूढाबूढी जोसुकैलाई पनि लान सक्छ। जीवनको कुनै भरोसा छैन। उमेरमै आध्यात्मिक लाइनमा भिज्न सकियो भने त हाम्रो अहोभाग्य ठहरिन्छ किनकि स्वस्थ तथा युवा शरीरमा धेरै खट्न, जुट्न सक्ने ऊर्जा हुन्छ जुन ऊर्जालाई गुरु चरण प्राप्तिमा लगाउन सकियो भने गुरु चरणको प्राप्ति शीघ्र हुन्छ भन्नेमा मेरो प्रबल विश्वास छ।

जय गुरुदेव !

**–जानुका के.सी.**
**पोखरा, कास्की**

योग विशेष

# प्राणायामको बायोकेमेष्ट्री

जतातत्तै योगको लहर चलिरहेको छ । योगका आसनहरु र प्राणायामको अभ्यासबाट अनेकौं रोगहरुबाट बच्न सकिने कुराहरु चिकित्सा विज्ञानले पनि पुष्टि गर्दै गइरहेको छ । अष्टाङ्ग योगको एउटा प्रमुख अंग 'प्राणायाम' हो जसको उद्देश्य शरीरमा अक्सिजन पूर्तिको मात्रा बढाउनु हो । शरीरमा अक्सिजनको महत्त्व कति छ र यसले कसरी कार्य गर्दछ भन्ने कुरा त मेडिकल बायोकेमेष्ट्रि र फिजियोलाजीको क्षेत्रमा भएका अनुसन्धानहरुबाट धेरै तथ्यहरु पत्ता लागिसकेका छन् । यहाँ तिनै वैज्ञानिक तथ्यहरुको बारेमा चर्चा गर्न गइरहेका छौं ।

जोन इ. हल र आर्थर सि. गाइटनद्वारा लिखित टेक्स्ट बुक अफ मेडिकल फिजियोलोजिमा भनिएको छ-

- सामान्य अवस्थामा मानिसको श्वासप्रश्वास क्रिया प्रतिमिनेट १५-१७ चोटि हुने गर्दछ ।
- मानिसले सामान्य रूपमा श्वास प्रश्वास गर्दा एकपटकमा श्वास लिने र फाल्ने वायुको मात्रा ५०० मि.लि. हुन्छ जसलाई टाइडल भोल्युम भनिन्छ ।
- एकपटक श्वास फेर्दा लिन सक्ने वायुको अधिकतम मात्रा भनेको ३५०० मि.लि. हो जसलाई इन्स्पीरेट्री क्यापासिटि भनिन्छ ।
- यसरी हेर्दा हामीले श्वासप्रश्वासको प्रत्येक चक्रमा ३००० मि.लि. वायु कम लिइरहेका हुन्छौं जसलाई इन्स्पीरेट्री रिजर्भ भोल्युम भनिन्छ ।
- त्यसैगरी हामीले सामान्यरूपमा श्वास फाल्दा पनि ५०० मि.लि.मात्र फालिरहेका हुन्छौं तर मानिसले बलपूर्वक एकपटकमा फाल्नसक्ने दूषित वायुको अधिकतम मात्रा १६०० मि.लि. हुन्छ जसलाई एक्स्पीरेट्री क्यापासिटी भनिन्छ ।
- यसबाट स्पष्ट हुन्छ श्वास प्रश्वासको प्रत्येक चक्रलाई पूर्णरूपले सम्पन्न नगर्दा शरीरभित्र कम मात्रामा अक्सिजन पुगिरहेको हुन्छ भने केही न केही मात्रामा दूषित वायु शरीरभित्रै रहिरहेको हुन्छ । यसरी प्रत्येक श्वसप्रश्वास क्रियामा भित्रै रहने दूषित वायुको मात्रा ११०० मि.लि. हुन्छ जसलाई एक्स्पीरेट्री रिजर्भ भोल्युम भनिन्छ । जसले प्रत्येक व्यक्तिको शरीरमा प्रत्यक्ष र परोक्षरूपमा हानी गरिरहेको हुन्छ भने प्रतिपल पूर्ण रूपमा अक्सिजन नपाएमा अनगिन्ती कोषहरु मर्ने हुन्छ ।

पामेला सि. च्याम्पे र रिचर्ड ए. हार्वेद्वारा लिखित बायोकेमेष्ट्रि लगायत प्राय:जसो सबै मेडिकल बायोकेमेष्ट्रिमा निम्न तथ्यहरु उल्लिखित छन् -

- 'हामीले खाएको खानामा भएको कार्बोहाइड्रेट, प्रोटिन र बोसो पदार्थबाट प्रत्येक कोषले माइटोकोन्ड्रियाको सहायताबाट अक्सिजनको उपस्थितिमा शक्ति उत्पादन गर्ने कार्य गर्दछ ।
- उक्त शक्तिलाई ए.टि.पि. भनिन्छ जसको सहयोगबाट हाम्रो शरीरले कार्य गरिरहेको हुन्छ । यस शक्ति उत्पादन गर्ने प्रक्रियालाई अक्सिडेटिभ् फस्फोराइलेसन भनिन्छ ।
- हामीले श्वासप्रश्वासमा लिएको २/३ भाग अक्सिजन शक्ति उत्पादन चक्र (क्रेब साइकल) मा खर्च हुन्छ । पर्याप्त अक्सिजनको उपस्थितिमा ग्लुकोज टुक्रँदा ग्लुकोजको एउटा अणुले ३८ ए.टि.पि. शक्ति उत्पादन गर्दछ भने अक्सिजनको अभावमा सोही ग्लुकोज अणु टुक्रँदा २ ए.टि.पि. मात्र शक्ति र हानिकारक ल्याक्टिक एसिड उत्पादन हुन्छ । त्यसै ल्याक्टिक एसिडले हाम्रा मांशपेशीहरुलाई असर गर्ने र दुःखाउने गर्दछ । त्यसैले पूर्ण अक्सिजनको अभाव हुँदा शरीरमा १९ गुणा कम शक्ति उत्पादन हुने गर्दछ ।'

प्राणायामको अभ्यासबाट नै इन्स्पिरेट्री रिजर्भ भोल्युम कम भएर शरीरमा अक्सिजनको मात्रा बढ्दछ र कार्बनडाइअक्साइडको मात्रा घट्दछ । शरीरका प्रत्येक कोषमा यथेष्ट अक्सिजन पुग्ने हुनाले हाइपोक्सिया भएर धेरै कोषहरु चाँडो चाँडो मृत्यु हुन पाउँदैन जसले गर्दा कोषको आयु बढ्ने र प्रत्येक कोषको आयु बढेपछि शरीरको पनि आयु बढ्ने तथ्य स्पष्ट हुन्छ ।

त्यसैगरी प्राणायामको अभ्यासबाट प्रत्येक कोषमा अक्सिजन यथेष्ट मात्रामा पुग्दछ र यथेष्ट मात्रामा शक्ति उत्पादन हुन मद्दत पुग्दछ । जसका कारण शरीरमा कार्य गर्न जोश, जाँगर, स्फूर्ति, खुशी र आनन्द प्राप्त हुन्छ साथै मानिस बूढो भए पनि शरीर फूर्तिलो हुन्छ ।

अल इन्डिया इन्स्टिच्युट अफ मेडिकल साइन्सका प्रोफेसर बि.के. आनन्द र उहाँका साथीहरुले योगीहरुमा इ.इ.जी.(इलेक्ट्रो इन्केफ्यालोग्राम)को माध्यमबाट अनुसन्धान गर्दा दिमागको अल्फा/डेल्टा तरंग बढेको देखियो जसबाट योगीहरुमा निद्रालाई जित्न

सक्ने क्षमता बढेको पुष्टि हुन्छ, त्यसैगरी इ.इ.जी.मा बिटा/अल्फा तरंग घटेको पाइयो जसबाट शरीर जति सक्रिय भए पनि मन र सोचाइका तरंगहरु स्थिर र शान्त हुने पुष्टि हुन्छ । यसकारण योगबाट रिस, राग, क्रोध आदि घट्ने र कठिन अवस्थामा पनि संघर्ष गर्न सक्ने क्षमताको वृद्धि हुने कुराको पुष्टि हुन्छ ।

प्राणायामको अर्को अनुसन्धानमा हेर्दा नाकको बायाँ प्वाल थुनेर दायाँ प्वालबाट बलपूर्वक श्वास-प्रश्वास गर्दा दिमागको बायाँ भागमा र बायाँ प्वालबाट गर्दा दिमागको दायाँ भागमा राम्रो असर पुगेको पाइयो । जसबाट हाम्रो दिमागका कोष(न्युरोन)हरु सक्रिय हुने गर्दछन् । हाम्रो शरीरको धेरैजसो कार्य जस्तै हर्मोनहरुको निष्कासन, शरीरको वृद्धि, मुटुको ढुकढुकी, इन्जाइमहरुको स्राव, सोचाइ, स्मरण शक्ति, बानी, व्यवहार जस्ता धेरै कुराहरु यिनै न्युरोनको सक्रियतामा भर पर्ने गर्दछ ।

योगा साइन्स क्याम्पस यु.के.द्वारा योगासन तथा प्राणायामको अभ्यास गर्ने विभिन्न समूहका मानिसहरुमा विभिन्न विषयमा अनुसन्धान गर्दा मोटोपन, उच्च रक्तचाप, हाड जोर्नी, डाइबिटिज, कलेजो, दम, हृदय, मृगौला र छालाका रोगीहरुमा उल्लेख्य फाइदा पुगेको पाइयो भने ती मानिसहरुमा सम्झन सक्ने क्षमता, कार्यशैली, सकारात्मक सोचाइमा वृद्धि भएको, पारिवारिक र समाजिक सम्बन्धहरुमा धेरै सुधार भएको पाइएको थियो ।

पतञ्जलि योगपीठ हरिद्वारबाट सम्पन्न योगका शिविरहरुमा, योगका माध्यमबाट उपचार गरिएका बिरामीहरुमा पाइएको परि णामहरुलाई आचार्य बालकृष्णले आफ्नो पुस्तक 'योग इन सिनर्जी उइथ मेडिकल साइन्स'मा मेडिकल टेस्टका प्रमाणहरु सहित उल्लेख गर्नुभएको छ जसमा माथि उल्लिखित रोगहरुबाहेक रक्त अर्बुद (Blood cancer), स्तन क्यान्सर, फोक्सोको क्यान्सर, हृदयघातसम्बन्धी रोगहरु, हेपाटाइटिस, महिनावारीको समस्याहरुमा बिरामीहरुले पूर्ण तथा आंशिकरूपमा फाइदा पाएका साथै एड्सका रोगीमा पनि CD4 सेलको संख्या बढेको प्रमाणहरु उल्लेख गरिएका छन् ।

जय गुरुदेव !

# आश्रम गतिविधि

## मासिक हवन कार्यक्रम

गत आश्विन ६ गते सोमबार पशुपति मृगस्थलीस्थित गोरक्षपीठमा श्री शिव गोरक्ष हवन सम्पन्न भयो । उक्त हवन बिहान ८ देखि ९ बजेसम्म संचालन भएको थियो ।

त्यस्तै, आश्विन ७ गते मङ्गलबार ललितपुरको लगनखेलस्थित वटुक भैरव मन्दिर परिसरमा तान्त्रोक्त वटुक भैरव हवन सम्पन्न भयो । उक्त हवन बिहान ७-८ बजेसम्म चलेको थियो । हवनमा सहभागी हुनेहरुले उक्त दिन कुकुरलाई खानेकुरा दिनुपर्ने र पिट्न नहुने नियम रहिआएको छ ।

त्यसैगरी, आश्विन १ गते बुधबार बिहान ८-९ बजेसम्म ललितपुरको लगनखेलस्थित महालक्ष्मी मन्दिर परिसरमा तान्त्रोक्त महालक्ष्मी हवन सम्पन्न भयो । उक्त हवनमा सहभागीहरु हवन गरेको दिनमा रिसाउन भने पाइँदैन । गत आश्विन २ गते बिहीबार लगनखेलको कुम्भेश्वरस्थित बगलामुखी मन्दिर परिसरमा तान्त्रोक्त बगलामुखी हवन सम्पन्न भयो । उक्त हवन बिहान ८–९ सम्म सञ्चालन भएको थियो ।

## दिव्य गुरु महोत्सव

गत आश्विन ५ गते आइतबार (तदनुसार सेप्टेम्बर २१ तारीख, २००८) बसुन्धरामा रहेको गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रममा विभिन्न कार्यक्रमका बीच दिव्य गुरु महोत्सव सम्पन्न भयो ।

स्तवन वन्दनासँगसँगै १०:१५ मा शुरु भएको उक्त दिव्य गुरु महोत्सवको पहिलो चरणको कार्यक्रममा गुरु पादुका पूजन, मन्त्रजप, हवन, आरती, भजन-कीर्तन र नृत्य आदि सम्पन्न भएका थिए । कार्यक्रममा पूजन गर्ने सौभाग्य साधिकाहरु सानुमैँया श्रीवास्तव र सुन्दरी बादेले प्राप्त गर्नुभएको थियो ।

कार्यक्रमको दोस्रो चरण गुरुसेवा दलकी सदस्य अनु श्रेष्ठको स्वागत-मन्तव्यबाट शुरु भएको थियो । यस चरणमा नृत्य, भजन तथा स्वचनको कार्यक्रम सम्पन्न भएका थिए । स्ववचनको क्रममा सावरपन्थी सदस्य नं. २ का सदस्य तथा साधना तथा शिविर विभाग संयोजक श्री रामजी अर्यालज्यूले रत्नतुल्य मानव जीवनलाई सदुपयोग गरेर उपलब्धिमूलक बनाउनु पर्ने धारणा राख्नुभयो । उहाँले गतिशील र ऊर्ध्वमुखी बन्दै गुरु सेवामा सदा समर्पित सेवकको रूपमा प्रस्तुत भएर आफूलाई धन्य बनाउनुपर्ने विचार पनि उक्त अवसरमा व्यक्त गर्नुभयो ।

### भजन-कीर्तन कार्यक्रम

गत आश्विन १६ गते आरती संचालन केन्द्र दाप्चाको आयोजनामा दाप्चास्थित आयुर्वेद भवनमा रहेको आरती संचालन केन्द्रको प्राङ्गणमा भजन-कीर्तन कार्यक्रम सम्पन्न भयो ।

कार्यक्रममा पंचमुखी महादेव भजन समुहको तर्फबाट विलकृष्ण श्रेष्ठ, दाप्चा भजन मण्डल बाट सप्तबहादुर श्रेष्ठ र प्रद्युम्न श्रेष्ठले भजन प्रस्तुत गर्नुभएको थियो । स्थानीय अंजनी पौडेल र सुजिता श्रेष्ठले स्वागत भजन प्रस्तुत गर्नु भएको कार्यक्रममा एघार सदस्यीय भवन निर्माण समितिको गठन भएको घोषणा पनि गरिएको थियो । समितिमा जीतलाल श्रेष्ठ संयोजक, तीर्थलाल श्रेष्ठ उपसंयोजक, सचिवमा कमला पौडेल र कोषाध्यक्षमा महेश श्रेष्ठ रहनुभएको छ ।

दिउँसो १:०० बजे प्रारम्भ भई साँझ ४:०० बजेसम्म संचालन भएको उक्त कार्यक्रममा भवन निर्माणका लागि रु. १५,०००।- (पन्ध्र हजार रकम पनि  उठेको थियो ।

कार्यक्रममा आरती संचालन केन्द्र दाप्चालाई जग्गा प्रदान गर्नुहुने साधक जीतलाल श्रेष्ठलाई सम्मान गरिएको थियो ।

### जग्गा हस्तान्तरण

सिद्धाश्रम शक्ति केन्द्रलाई विभिन्न महानुभावहरुबाट आश्रम भवन निर्माणका लागि जग्गा प्रदान गर्ने क्रममा तीब्रता आइरहेको छ । यसै तीब्रतालाई निरन्तरता दिनुहुँदै गत आश्विन १० र ११ गते सम्पन्न कार्यकर्ता सहायक समूह 'ङ'को तालिम कार्यक्रममा साधक जीतलाल श्रेष्ठले दाप्चा गाविस वडा नं. ८ मा रहेको २ आना २ पैसा जग्गाको आरती संचालन केन्द्र दाप्चाका लागि सो जग्गाको लालपुर्जा सावर मातृका साधिका विन्देश्वरी बरालज्यूलाई हस्तान्तरण गर्नुभयो ।

**जब सारा संसार विनाशको संघारमा उभिनेछ तब सम्पूर्ण विश्वको दृष्टि आर्यावर्ततिर पर्नेछ र आर्यावर्तको दृष्टि मेरा शिष्यहरूउपर पर्नेछ । (गुरूवाणी)**

# आश्रम गतिविधि
## कार्यकर्ता सहायक समूह ङ र च को तालिम

सिद्धाश्रम शक्ति केन्द्रले मासिकरूपमा सम्पन्न गर्दै आइरहेको तालिमअन्तर्गत गत आश्विन १० र ११ गते कार्यकर्ता सहायक समूह 'ङ' र 'च' को तालिम सम्पन्न भएको छ ।

समूह 'ङ'को तालिम बिहान ६.३० बजे र समूह 'च'को बिहान ११:३० बजे शुभारम्भ उक्त तालिम कार्यक्रममा दुवै समूहबाट काठमाडौँ, भक्तपुर, ललितपुर, काभ्रे, सिन्धुपाल्चोक, सिन्धुली, दोलखा, चितवन, तनहुँ, गोरखा, कास्की गरी एघार जिल्लाबाट सहभागिता रहेको थियो ।

कार्यक्रममा सम्पन्न गुरु पादुकाको दिव्य पादुकाको पूजन गर्ने सौभाग्य पाउनु हुनेहरुमा 'ङ' समूहको पहिलो दिनको पूजनमा शिवमान डङ्गोल, गोमा हाडा, दलबहादुर श्रेष्ठ र अनु विष्ट हुनुहुन्थ्यो भने दोस्रो दिनको पूजनमा हरिमाया के.सी., राजेश्वरी रंजीतकार, लक्ष्मी बनमाली, कल्याणी श्रेष्ठ, सानु लुङ्गेली मगर र कविता सुनुवारले गुरु पूजन गर्ने सौभाग्य पाउनुभएको थियो ।

त्यस्तै, समूह 'च'अन्तर्गत पहिलो दिनको पूजनमा मचाम महर्जन, सुरेन्द्रप्रसाद कुशवाहा र दिल्लीमाया प्रधानले गुरु पूजन गर्ने सौभाग्य पाउनुभएको थियो दोस्रो दिनको पूजनमा सुन्तली के.सी., राधा न्यौपाने, शक्ति उपाध्याय र खीमा आचार्यले उक्त सौभाग्य पाउनुभएको थियो ।

कार्यक्रमको अन्त्यतिर सुनाइएको ग्रेडिङअनुसार समूह 'ङ'बाट 'घ'मा पदोन्नत हुने कार्यकर्ताहरुमा सुनिता के.सी., शिवनारायण महर्जन, सकून डोटेल, विमला भण्डारी, शिवमान डङ्गोल, आरती थापा, सृजना सिलवाल, कल्याणी श्रेष्ठ, सविता थापा मगर, शिवकुमार मण्डल, लक्ष्मी बनमाली, दीपलाल श्रेष्ठ र सानु लुङ्गेली मगर हुनुहुन्छ । यसैगरी समूह 'च'बाट 'ङ'मा पदोन्नत हुने कार्यकर्ताहरुमा क्रमश: अनिल थापा, कृष्णबहादुर श्रेष्ठ, सुनयना श्रेष्ठ (२), अम्मर श्रेष्ठ, ज्ञानलाल श्रेष्ठ, पद्मसिंह धामी, मैँया थापा (२), मैँया के.सी., दिनेश थापा, अंजीत महर्जन, रमा थापा, उल्जना तण्डुकार, केशव कुमार के.सी., रमिता महर्जन, अस्मिता भण्डारी र निर्मला भण्डारी हुनुहुन्छ ।

## पत्रिका सदस्यता विस्तारका लागि हार्दिक आह्वान

**परमपूज्य सद्‌गुरुदेवहरूको असीम कृपा, अनुकम्पास्वरूप गोरक्ष निखिल वाणी प्रकाशनको निरन्तरतालाई कायम राख्दै दशौँ वर्षमा प्रवेश गर्न सफल हुनाका साथै नेपाल सरकार, प्रेस काउन्सिलको पत्रिका वर्गीकरणमा 'क' श्रेणीमा पर्न सफल भएको सहर्ष जानकारी गराउँदै आध्यात्मिक शक्ति अनुसन्धानमूलक यस मासिकलाई यस स्तरसम्म लिएर आउने महान् कार्यमा सक्रियरूपमा सहभागी सबैलाई हार्दिक धन्यवाद दिन चाहन्छौँ । यस मासिकलाई अझै पठनीय, संग्रहणीय र स्तरीय बनाउने कृतसंकल्प गर्दै पत्रिकामार्फत सद्‌गुरुदेवहरूको चिन्तन विस्तार गर्न र जन-जनमा आध्यात्मिक ज्ञानको प्रकाश फैलाउन यस पत्रिकाको ग्राहक विस्तार योजनामा भाग लिई अक्षय पुण्य आर्जन गर्नका लागि सम्पूर्ण साधक साधिका, कार्यकर्ता र जिज्ञासु महानुभावहरूमा हार्दिक अनुरोध गर्दछौँ । पत्रिका विस्तारका लागि आवश्यक रसिदका लागि संस्थाको पत्रिका वितरण तथा पुस्तकालय व्यवस्थापन उपविभाग, नजिकका सम्पर्क कार्यालय एवं आरती संचालन केन्द्रहरूमा सम्पर्क राख्नुहुन पनि सूचित गरिन्छ ।**

**सिद्धाश्रम शक्ति केन्द्र**
पत्रिका वितरण तथा पुस्तकालय व्यवस्थापन
उपविभाग
फोन नं २१००१५३, ०१६२२५१७७

## कणकणमा गोरख जगाऔँ

# ध्यान! ध्यान!! ध्यान!!!

## तान्त्रिक साधना तान्त्रिक ध्यान मानव जीवनको वास्तविक ज्ञान

परमपूज्य सद्‌गुरुदेवहरुको असीम कृपाले
सिद्धाश्रम शक्ति केन्द्रमा विभिन्न तहका तान्त्रोक्त ध्यानका कक्षाहरु सञ्चालन भइरहेको हुनाले उक्त ध्यानका कक्षाहरुमा प्रवेशका लागि केन्द्रलगायत विभिन्न सम्पर्क कार्यालयहरुमा सम्पर्क राख्नुहोला।

**सिद्धाश्रम शक्ति केन्द्र**
**बसुन्धरा, काठमाडौँ**

उन्नत ललाट, समुद्रवत वक्ष, अग्लो कद, तीखा आँखा, अनुहारमा पूर्ण आत्मविश्वास, धोतीकुर्तामा सजिएको व्यक्ति कुनै पनि प्रकारले सबै क्षेत्रमा निष्णात होला भन्ने कसैलाई पनि लागिरहेको थिएन । त्यतिबेला भैरुआ अघोरीले उभिएर विरोध गर्दै भने कि यदि यिनी अघोर प्रहार झेल्छन् भने म यिनलाई सभापति मान्न तयार छु । उनको वाक्य पूरा नहुँदै कपाली बाबाले उभिएर गालीको वर्षा गर्दै भने– म जिउँदो छँदाछँदै कोही पनि सभापति बन्न सक्दैन, मैले चौंसठ्ठी कृत्य सिद्ध गरेको छु र म यसलाई यहीं उभिएर नै सिध्याउन सक्छु। उनको मुखबाट अनवरतरूपमा गालीको वर्षा भइरहेको थियो, चारैतिर सन्नाटा छाएको थियो ।

त्रिजटा उठे, क्रोधले उनको अनुहार रातो-निलो थियो । उनले कपाली बाबा र भैरुआ अघोरीको चुनौतिलाई स्वीकारे । उनले भने– श्रीमालीले यसको समुचित उत्तर दिनुहुनेछ । मलाई यो पनि थाहा छ कि उहाँ विश्वविख्यात् योगीराज सच्चिदानन्दज्यूका प्रिय शिष्य हुनुहुन्छ। साथै निखिलेश्वरानन्दको रूपमा उहाँले सबै कृत्यहरु सिद्ध गर्नुभएको छ, उहाँ पूरा हिमालयमा परिचित हुनुहुन्छ। उहाँले गृहस्थ प्रवेश गरेपछि आफ्नो नाम परिवर्तन गर्नुभएको हो ।

स्वामी नवरात्र्यानंदज्यूलाई सम्झना भयो– गुरु पूर्णिमाको त्यस दिन स्मरण हुन गयो, त्यस दिनको एक-एक दृश्य आँखासामु नाच्न थाले, सारा शरीर रोमाञ्चित भयो ।

वाराणसीको प्रसिद्ध दशाश्वमेध घाट, ठाउँ-ठाउँमा लाश जलिरहेका थिए । मृतकको शरीर जलेर वातावरणलाई एउटा अचम्मको गन्धले भर्दै थियो । घाटको किनारमा नै डोमको घर तथा त्यसको नजिकै रहेको सानो बगैंचाबाट मसानको सम्पूर्ण दृश्य देख्न सकिन्थ्यो ।

पछिल्लो दुई महिनादेखि मैले हिडिम्बा साधना गरिरहेको थिएँ। मेरो साथमा योगी निखिलेश्वरानन्द फक्कड, मस्त, निर्द्वन्द्व निस्पृह, कुनै माया-मोह नभएका, न कायाको चिन्ता, न मायाको फिक्री, अद्भुत व्यक्तित्वले सम्पन्न, पाउमा खराऊ, कम्मरमा धोती, शरीरको माथिको भाग अनावृत्त, कुनै वस्त्र थिएन, लामो जटा, दैदीप्यमान अनुहार, दिप्दिप् गर्दै चम्केका आँखा सबै मिलाएर पूरा व्यक्तित्वमा एउटा अपूर्व चुम्बकीय शक्तिले आवृत्त, जसलाई एकपटक देख्दा पनि कुरा गर्न मन लागिहाल्ने हुन्थ्यो, कैयौं साधु, योगी, तान्त्रिक उहाँको शिष्य बन्नका लागि आतुर ! तर फक्कड उहाँ कसैप्रति बाँधिन नै तयार हुनुहुन्थेन, न त शिष्यहरुद्वारा घेरिन नै । उहाँ मानिसहरुसँग भेटघाटमा पनि मन दिनुहुन्नथ्यो। एक्लै, एकान्तप्रिय, साधनामा लीन, तल्लीन, कठोरभन्दा कठोर साधना गर्नका लागि तयार, पछिल्लो

त्रिजटा बस्नासाथ यति धेरै कोलाहल हुन लाग्यो कि केही पनि बुझ्न सकिरहेको थिएन । कसैले पनि श्रीमालीको नाम न त सुनेका नै थिए, न त उहाँलाई कसैले देखेका नै थिए। भूर्भुआ बाबाले प्रस्तावलाई अनुमोदन गर्दै भनेका थिए कि व्यक्तिगत रूपले उनी श्रीमालीज्यूसँग परिचित छन् । उनले भनेका थिए– सभापति पदका लागि सर्वथा श्रीमालीज्यू योग्य हुनुहुन्छ। अकस्मात् त्रिजटाले आफूसँग बसेका एकजना व्यक्तिलाई उभ्याए । सबैले त्यसतर्फ हेर्न लागे । कसैलाई पनि विश्वासै थिएन कि यस्तो साधारण गृहस्थ व्यक्ति कुनै पनि प्रकारले यति धेरै सिद्ध हुन सक्दछ ।

# परमपूज्य सद्‌गुरुदेवको अवतरण यात्रा

केही महिनादेखि अघोर साधनामा रत हुनुहुन्थ्यो, मसान साधना, चिता साधना, शव साधना, अघोरीहरुका बीच साधनामा रत, कुनै हिचकिचाहट थिएन, म दुई महिनादेखि उहाँसँगै थिएँ, तर उदासीन, निस्पृह, निर्मोह, कहिलेकाहीँ सम्भव भएमा दुई-चार मिनेट कुरा गर्नुहुन्थ्यो, कहिले त त्यो पनि हुँदैनथ्यो, म जति पनि यस व्यक्तित्वका बारेमा बुझ्न खोज्थेँ, त्यति नै अल्झिन पुग्थेँ ।

दशाश्वमेध घाटमा आएको छ दिन भइसकेको थियो, आज सातौँ दिन थियो, रातभरि मसानमा साधनारत ! यहाँ नै अघोरी पशुपतनाथसँग भेट हुनु थियो, यस्तो सम्भावनाको आभास भएको थियो ।

ती दिनमा स्वामी निखिलेश्वरानन्द कृत्या साधनामा रत हुनुहुन्थ्यो, कठिन, कठोर साधना ! अलिकति मात्र चुक्न पुग्यो भने प्राण समाप्त ! भगवान् शंकरकी कृत्यालाई रिझाउन, अनुकूल गर्न कुनै मामुली साधना थिएन ।

तब त्यस साँझको बेलामा मसानघाटबाट एकजना अघोरी आइरहेको देखियो । नजिक आइपुग्दा मात्र उसलाई स्पष्ट देख्न सकियो– मैलो, गन्हाएको, लामो जटायुक्त कपाल, फोहोरी अनुहार, धसिएको पहेँलो आँखा, हातमा एउटा खप्पर, मयल भरिएका लामा-लामा नङ र सारा शरीर गन्हाएको देखेर घिन लागिरहेको थियो, हावासँगसँगै गन्ध फैलिएको हुनाले टाउको भारी भएको थियो, यस्तो गन्ध त जलिरहेको लाशबाट पनि आइरहेको थिएन । गन्धको साक्षात् जीवन्त रूप थियो त्यो ।

त्यो आएर बस्यो, हातमा रहेको खप्परमा केही खाद्य पदार्थजस्तो थियो, उसको हातबाट पीप बगिरहेको थियो र त्यही हातले खाद्यपदार्थ झिक्दै खाँदै थियो त्यो !

उसले भन्यो– स्वामी, भोक लागेको छ भने खाऊ । संकेत निखिलेश्वरानन्दतिर थियो । म त मर्न तयार थिएँ तर त्यस हातबाट केही पनि खान तयार थिइन । मलाई यदि खान भनेको भए मैले त खप्परले नै हिर्काउँथे होला त्यस अघोरीलाई ।

निखिलेश्वरानन्दले उसलाई हेर्नुभयो । गन्ध यति फैलिएको थियो कि सारा शिर नै झन्झनाएको थियो । त्यस अघोरीको मृत्यु नजिक आएको छ भनेर मैले ठानेँ किनकि निखिलेश्वरानन्दको रिस जगजाहेर थियो र त्यो निखिलेश्वरानन्दलाई नै खानलाई आमन्त्रित गरिहेको थियो ।

तर आश्चर्य ! निखिलेश्वरानन्द उठेर त्यस अघोरीसँग टाँसिएर बस्नुभयो । अघोरीले पीप भरिएको हातबाट लड्डुको सानो टुक्रा खप्परबाट निकालेर निखिलेश्वरानन्दतिर अघि बढायो । निखिलेश्वरानन्दले लड्डुलाई उसको हातबाट मुखमा हाल्नुभयो । उप ! अत्यन्तै गन्हाएको, घिनलाग्दो !

घोर आश्चर्य ! तुरुन्तै पीप भरिएको अघोरी अदृश्य भयो । त्यसको स्थानमा साक्षात् शंकर, भगवान् विश्वनाथ उभिनुभएको थियो । निखिलेश्वरानन्द उहाँको चरणनजिक बस्नुभएको थियो, उहाँको शिरमा थियो– काशीका बाबा विश्वनाथको वरद हस्त !

तुरुन्तै बाबा विश्वनाथ अदृश्य हुनुभयो । निखिलेश्वरानन्दको पनि समाधि लागेको थियो । यस्तो लागिरहेको थियो कि यी सबै घटना हिजो भएको हो । यस्ता स्वामी निखिलेश्वरानन्दको सामु को उभिन सक्दथ्यो र ?

भूर्भुआ बाबाले श्रीमालीज्यूलाई मञ्चमा ल्याएर उभ्याए । यसबीच अघोरी, तान्त्रिक, मान्त्रिक, योगीहरुमा चर्चा चल्यो कि श्रीमालीज्यू नै पहिलेका स्वामी निखिलेश्वरानन्द हुनुहुन्छ, त्यसैले उहाँसँग कसले के भन्न सक्छ । यति विचार गरेर धेरै शान्त थिए । माँ कृपालु भैरवीले यतिसम्म भनिन् कि सभामा उहाँभन्दा ठूलो कोही छैन, उहाँसँग जसले सामना गर्छ उसले आफ्नो अपमान आफै गर्नेछ ।

अघोरी, तान्त्रिकहरुले एकै स्वरमा भने कि कपाली बाबा हाम्रो तर्फबाट नियत छन् र सभापतिको चयन दुवैका बीच नै हुनुपर्दछ ।

कपाली बाबाले आफ्नो स्थानबाट उठेर भने– यो बच्चा छ, त्यसैले यसैलाई पहिलो अधिकार दिन्छु कि यसले नै पहिले ममाथि प्रयोग गरोस् किनकि मेरो प्रहारपछि त यसको अस्तित्व नै रहने छैन ।

श्रीमालीज्यूले पहिलोपटक आफ्नो मुख खोल्नुभयो– कपाली बाबा मेरा आदरणीय हुनुहुन्छ । तर उहाँमा जुन व्यर्थको घमण्ड छ, अहं छ, त्यसलाई उहाँले त्याग्नु नै राम्रो हुनेछ । साथै मुस्कुराएर श्रीमालीज्यूले कपाली बाबालाई भ्रममा नपर्न पनि आग्रह गर्नुभयो र भन्नुभयो– म सबै तान्त्रिक, मान्त्रिकहरुको चुनौतिलाई एकैपटक स्वीकार्न तयार छु, मेरो अस्तित्व समाप्त हुने त कुरा नै छोडौँ, मेरो केही बिग्रने छैन । मलाई सभापति पदको इच्छा छैन तर तपाईंहरुमा जुन व्यर्थको अहं छ त्यस चुनौतिलाई स्वीकार्न म मञ्चमा उपस्थित छु । श्रीमालीज्यूको मुखमण्डलमा आत्मविश्वास, सरलता तथा शान्ति थियो । कपाली बाबा भने क्रोधले उग्र भइरहेका थिए । दुवैमा कुनै तुलना हुन सकिरहेको थिएन । तब श्रीमालीज्यूले कपाली बाबालाई चुनौति दिनुभयो कि म तपाईंको प्रयोगबाट समाप्त हुने तपाईं ठान्नुहुन्छ भने तपाईं आफै पहिले प्रयोग गर्नुहोस् । यो कुरा पनि म तपाईंलाई स्पष्ट गर्न चाहन्छु कि तपाईंसँग भएका उच्चभन्दा उच्च संहारक अस्त्र प्रयोग गर्नुहोस् जसबाट तपाईंको मनमा कल्मष नरहोस् ।

यति सुन्नासाथ नै कपाली बाबाले आफ्नो दायाँ हातमा शून्यबाट केही सर्स्यूँका दाना प्राप्त गरे र संहारिणी कृत्या प्रयोग आरम्भ गरे जसको सामना गर्नु ठूलाभन्दा ठूला तान्त्रिकहरुको पनि वशको कुरा थिएन । तब जोडले हुँकार लिएर राताकाला कपाली बाबाले त्यस दानालाई श्रीमालीज्यूतिर फ्याँके । सबैले श्रीमाली एकछिन तीन-चार कदम लड्खडाएको देखे । उहाँ पुन: आफ्नो स्थानमा त्यति नै सरल र सहज भावमा आएर उभिनुभयो । कपाली बाबाको अनुहार रक्तविहीन भयो । कसैले पनि अनुमान गरेका थिएनन् कि श्रीमालीज्यूसँग कपाली बाबाले प्रयोग गरेको कृत्यालाई समाप्त गर्ने विधि पनि छ । कपाली बाबाको आँखामा भय व्याप्त भयो । क्रमश:

जय गुरुदेव !

**आत्मीय पाठकवर्ग, गुरुको महिमा र महत्त्वको बारेमा शास्त्रले उल्लेख गरेका विषयहरूलाई जनसमक्ष उजागर गर्दै गुरूप्रतिको सच्चा भाव र भक्ति जागृत गर्ने उद्देश्यले यस स्तम्भअन्तर्गत अर्थसहित प्रकाशित गर्दै आइरहेका छौं ।**

**गुरुरादि रनादिश्च**
**गुरुः परमदैवतम् ।**
**गुरुमंत्रसमो नास्ति**
**तस्मै श्री गुरवे नमः ॥१२३॥**

भावार्थ : गुरु नै सृष्टिका आदि कारण हुनुहुन्छ, उहाँ नै आदि तथा अनादि पनि हुनुहुन्छ । 'अनादि' यसकारण हुनुहुन्छ कि उहाँको उत्पत्तिको प्रयोजन छैन । 'आदि' यसकारण हुनुहुन्छ कि साधक साधनाहरुको माध्यमले उहाँको परमस्वरूपको ज्ञान प्राप्त गर्दछ । गुरु देवाधिदेव हुनुहुन्छ, जो सदैव सम्पूर्ण देवताहरुद्वारा वन्दनीय, पूजनीय एवं सेवनीय हुनुहुन्छ, सर्वत्र प्रथम पूजा गुरुकै हुन्छ, गुरु मंत्रसमान उदात्त एवं प्रभावशाली अरु कुनै मंत्र छैन, यस्ता गुरुलाई भावपूर्ण हृदयदेखि प्रणाम छ ।

**एक एव परो बंधु**
**र्विषमे समुपस्थिते**
**गुरुः सकलधर्मात्मा**
**तस्मै श्री गुरवे नमः ॥१२४॥**

भावार्थ : सर्व धर्ममय गुरु संकट आई पर्दा एक्लै बन्धुले जस्तै साथ दिनुहुन्छ तथा सबै धर्मलाई समबुद्धिले हेर्नुहुन्छ । यस्ता हितैषी गुरुलाई अत्यधिक भावपूर्ण हृदयदेखि नमस्कार छ । विपत्ति आई पर्दा जसलाई संसारका सबै नातागोताले साथ छोडिदिन्छन् (स्वार्थवश सँगै जोडिएको देखिए पनि अन्तर्मनले सबैको चिन्तन बेग्लै भइसक्छ) त्यसबेला गुरु नै उसका लागि सहायकसिद्ध हुनुहुन्छ, यो नै उहाँको सबैभन्दा ठूलो पहिचान हो ।

**गुरुमध्ये स्थितं विश्वं**
**विश्वमध्ये स्थितो गुरुः ।**
**गुरुर्विश्वं न चान्योऽस्ति**
**तस्मै श्री गुरवे नमः ॥१२५॥**

भावार्थ : सारा ब्रह्माण्ड गुरुमा समाहित छ र गुरु ब्रह्माण्डमा समाहित हुनुहुन्छ, यस किसिमले गुरु यस संसारभन्दा अलग हुनुहुन्न, यस्ता गुरुलाई म नमस्कार गर्दछु । सम्पूर्ण ब्रह्माण्डको उत्पत्ति गुरुबाटै भएको हो, ब्रह्मत्व रूपले सूक्ष्मभन्दा पनि सूक्ष्म भएको कारण उहाँ सर्वत्र व्याप्त हुनुहुन्छ, उहाँकै चेतनाले यो समस्त ब्रह्माण्ड सजीव भएको छ । जसरी चिनीबाट बनेको मिठाई चिनीदेखि अलग हुन सक्दैन, त्यस्तै गुरु र ब्रह्माण्ड दुवै अभिन्न छन् ।

**भवारण्य प्रविष्टस्य**
**दिङ्मोह भ्रान्त चेतसः ।**
**येन संदर्शितः पन्थाः**
**तस्मै श्री गुरवे नमः ॥१२६॥**

भावार्थ : संसाररूपी जंगलमा अलमलिएर दिग्भ्रमित शिष्यलाई सुमार्ग देखाउने गुरुत्वलाई म अत्यन्त विह्वल, भावयुक्त भएर नमस्कार गर्दछु । यस संसारका विषयभोगहरु यति रमणीय र सुखद छन् कि यिनको मोहपाशबाट बाहिर निस्कनु सबैका लागि सहज छैन, जीवले यस आसक्तिबाट बाहिर निस्कनका लागि गुरुको आश्रय लिनैपर्छ । तसर्थ गुरुको खोज र उहाँको कृपा प्राप्तिका लागि शिष्यले हरेक किसिमका प्रयास गर्नु आवश्यक छ ।

जय गुरुदेव !

# श्री निखिलेश्वर शतकम्

॥१०१॥

**हित्वाऽखिलं कलिमलं परिशुद्धिदीप्ते,**
**मन्मानसे स्वकमखण्डविभामुदेहि ।**
**चित्तं लयं त्वयि भवेदिति यामाना;**
**वन्दे गुरो ! निखिल ! ते चरणारविन्दम् ॥**

हे प्रभु ! मेरा आसक्तिहरु जतिसुकै प्रबल भए पनि निखिल ब्रह्माण्डव्यापिनी शक्तिका सामु अति छुद्र होलान् भनी ठान्दछु र यही विचारले मेरो पापमय जीवनको उद्धारको लागि सुखद आश्वासनको काम गर्दछ । तसर्थ अहिले जस्तोसुकै स्थिति भए पनि मैले श्री निखिलेश्वरलाई पाइसकेकी छु र म जीवनका असीम सामर्थ्यरूपी कामनालाई पूर्ति गर्नका लागि हजूरसमक्ष निसंकोच प्रस्ताव राख्दछु । हजूरको अतुलनीय सामर्थ्य हुँदाहुँदै पनि मलाई यस सौभाग्यबाट वञ्चित नगर्नुहोस् । हे गुरुदेव ! मभित्र चिरकालदेखि जमेर रहेको मनोमालिन्यलाई नष्ट गरेर चित्तशुद्धिबाट प्रकाशित मेरो मनमा आफ्नो अखण्ड-शाश्वत्-चिरस्थायी उज्यालोले झलमल्ल गरिदिनुहोस् । मेरो चित्त हजूरमा नै विलय होस्, यसै याचनाका साथ हे गुरुश्रेष्ठ निखिलेश्वरानन्दज्यू ! म हजूरको चरणकमलमा वन्दना गर्दछु ।

॥१०२॥

**शक्तिर्न मे विहितमंत्रविधां विधातुं,**
**नैकाग्रचमेति चलवृत्तिमनोऽपि योगे ।**
**एकस्त्वदीय-करुणार्द्रदृशोऽवलम्बः;**
**याचे तमेव गुरुदेव ! मयि प्रसीद ॥**

हे गुरुश्रेष्ठ ! निखिलेश्वर ! मैलै साधनात्मक पूर्ण उत्थानका लागि पटक-पटक प्रयास गर्दा पनि त्यस दिशामा आफूलाई असक्त र असफल नै अनुभव गरेँ । मैले पटक-पटक आफ्नो असामर्थ्यको व्याखान छाँट्नु आवश्यक छैन किनभने हजूर स्वयं नै सर्वज्ञ हुनुहुन्छ । तैपनि हजूरसँग कुरा गर्ने मौका पाएको बेला यस लोभी मनले हजूरसमक्ष आफ्नो बारेमा व्याख्यान छाँट्न करै लगाउँछ । तसर्थ म फेरि प्रार्थना गर्दछु, 'हे गुरुदेव ! हजूरबाट प्रदान गरिएका मन्त्रहरुको यथेष्ट विधिपूर्वक अनुष्ठान गर्ने शक्ति ममा छैन र मेरो मन नितान्त चञ्चल छ, यो मन एकाग्र हुन नसकेकोले योगनिष्ठ पनि हुन सक्दैन । अब एक मात्र सहारा हजूरको करुणा दृष्टिको छ र यसैका लागि म हजूरसँग याचना गर्दछु । हे गुरुदेव ! मसँग प्रसन्न भएर मेरो जीवनलाई धन्य गरिदिनुहोस् ।

जय गुरुदेव !

## सावर संरचनाबाट प्राप्त

# दिव्य साधनात्मक सूत्रहरू

*मन्त्र साधनाको क्षेत्रमा अघि बढेर उच्चता हासिल गर्न चाहने सम्पूर्णका लागि अत्यन्त महत्त्वपूर्ण सूत्रहरू जसको अक्षरशः पालना गर्नाले मात्र सफलता प्राप्त हुन्छ, यस्ता दिव्यतम सूत्रहरू श्री सावर संरचना शक्ति केन्द्रद्वारा प्रकाशित तथा योगी शिवशक्तिश्वरानन्द एवं योगी कर्मवीरानन्दद्वारा रचित ग्रन्थ 'मन्त्र साधना–ऊर्ध्वसंगति'को खण्ड घ (सावर संरचनाबाट प्राप्त दिव्य साधनात्मक सूत्रहरू) पाठकवर्गको लाभार्थ क्रमशः प्रकाशित गर्दै आइरहेका छौँ । हामीलाई आशा एवं विश्वास छ, यी सूत्रहरूले यहाँहरूको साधनात्मक उच्चता प्राप्तिमा अवश्यमेव ठोस योगदान दिनेछन् ।*

### मुहुर्त, योगः

जे कार्य गर्नको लागि पनि योग चहिन्छ । बिनायोग संसारमा केही पनि हुँदैन । संसारको सृष्टि नै योगमा अडेको छ, चलेको छ । एउटा व्यक्तिको दैनिक जीवन पनि थाहै नपाई मुहूर्त, योगअनुसार चलायमान भइरहेको हुन्छ । जस्तै, हाम्रो उठ्ने समय हुन्छ, खाने समय, अफिस जाने समय हुन्छ, जे कार्य पनि ठीक समयमा अर्थात् ठीक मुहूर्तमा गरेनौं भने हामीलाई अप्ठ्यारो पर्न सक्छ । ठीकठीक समयमा गरिने कार्य नै मुहूर्त हो । सामान्यतया मुहुर्त भन्नाले कुनै कार्य गर्नका लागि जुरेको विशेष समय भन्ने बुझिन्छ । यसरी विशेष वा दिव्य कार्य सम्पन्न गर्नका लागि जुरेको समयलाई

सामान्य अर्थमा मुहूर्त भनेर बुझिन्छ। कुनै दुई चीजको मिलनलाई योग भनिन्छ। भक्त र भगवान्‌लाई मिलाउने कुनै दिव्य क्षण पनि हुनसक्छ योग, अथवा शिष्य र गुरुको मिलनको कडीलाई योगको रूपमा बुझ्न सक्छौं। योग मिल्दा, मुहूर्त मिल्दा नै कार्य सफल हुने हो। त्यसैले जे कार्य गर्दा पनि मुहूर्त मिलाउने प्रचलन हाम्रो समाजमा रहँदै आएको छ।

हाम्रो समाजमा शुभकर्म गर्दा, दैवी कर्म गर्दा, दिव्य-दिव्य कार्य हुँदा मुहूर्त, योग मिलाएर गर्ने चलन छ। यसरी योग मिल्दा गरेको कार्यबाट सोचेजस्तै सफलता मिल्छ भन्ने जनविश्वास रहँदै आएको छ। व्यक्ति जन्मेदेखि मर्ने बेलासम्म गरिने प्रत्येक दिव्य कर्महरु मुहूर्त हेरी गर्ने गरिन्छ। यसरी दिव्य मुहूर्तमा कार्य गर्न सके दैवी कृपा प्राप्त हुने गर्दछ।

मन्त्र साधनामा अगाडि बढ्ने प्रत्येक व्यक्तिले पनि आफ्नो लागि कुन साधना जुरेको छ, कुन देवी देवताको साधनामा कुन मुहूर्त ठीक हुन्छ, कुन मुहूर्तमा मन्त्र ग्रहण गर्दा राम्रो हुन्छ, कस्तो किसिमको योग परेको छ, आदि कुराहरुको विचार गर्नुपर्दछ। मुहूर्त नजुरी गरेको साधनाबाट सोचेजस्तो लाभ हुँदैन। त्यसैले समय, परिस्थितिअनुसार कुन साधना कुन समयमा गर्दा सफल हुन्छ, यी कुराको ज्ञान हासिल गर्नुपर्दछ। देवी देवताको कुरा गऱ्यौं भने पनि तेत्तीस करोड देवी देवताहरु छन्। त्यत्तिका धेरै देवी देवता मध्ये कसको साधना गर्दा राम्रो हुने हो, कुन देवी देवताले छिटो कृपा, आशीर्वाद गर्ने हुन्, कुन साधना छिटो सफल हुने हो, आदि इत्यादि प्रश्नहरु उब्जिन सक्दछन्। त्यसैले योग मिलाएर देवी देवताको साधना गर्नुपर्दछ। मुहूर्त हेरेर मात्रै साधनामा अगाडि बढ्नु पर्दछ।

साधनात्मक रूपमा सफलताको लागि यी माथिका कुरालाई ख्याल राख्नुपर्दछ। यत्तिकै किताब हेरेर, आफूलाई मन लाग्यो भनेर योग नमिलाई, मुहूर्त नमिलाई साधना गर्नाले सफल हुँदैन। त्यसैले सद्‌गुरुको शरणमा परी दिव्य योग मिलाई मुहूर्त अनुसार साधना गरौं, साधनामा सफलता प्राप्त गरौं।

जय गुरुदेव !

# जाँदाजाँदै

नेपाली मात्रको महान् चाड बडादशैँले भरखरै बिदा लिएको छ। यस वर्षको बडादशैँ हामी नेपालीहरुका लागि एउटा बेग्लै रौनक, उत्साह र उमङ्ग लिएर आयो र गयो। तर कतिपय नेपालीहरुका लागि भने एक छाक भात खान पनि नपाएर यो दशैँ बितेर गयो। विशेष गरेर हिमाली भेगहरुमा बस्ने दाजुभाइ दिदिबहिनीहरु जसले वर्ष भरिमा एक छाक भात खान पनि ठूलो कुराको रुपमा लिने गर्नुहुन्छ, उहाँहरुलाई यस वर्षको दशैँले भात खाने स्थिति बनाएन। विभिन्न कारणहरुले गर्दा चामल अक्षताको रुपमा पनि प्रयोग गर्न नपाउने स्थिति ती दाजुभाइहरुको लागि बन्यो भने बाढी, पहिरोजस्ता प्राकृतिक विपत्तिहरुले सयौँ, हजारौँ नेपालीहरुलाई आक्रान्त बनाएर दशैँलाई दशाकोरुपमा रुपान्तरण गरिदियो। ती सम्पूर्ण नेपालीहरु जसले यस वर्षको दशैँ यसरी मनाउँला, यसो गरुँला, उसो गरुँला भनेर सपना बुनेका थिए, कल्पनाका उडानमा उडेका थिए, ती सबै सपना, कल्पना चकनाचुर भए। आफ्नै घर, आफ्नै खेती, आफ्नै बारी, धन, सम्पति, परिवार, सबैले सुसज्जित व्यक्तिहरुलाई अहिले घरबारविहीन भएर बाढीपीडितको रुपमा राहतको भरमा जिन्दगी बिताउनुपर्ने अवस्था सृजना भइरहेको छ। तसर्थ मानिसको जिन्दगी कहाँ, कहिले, कुन बेला, के हुन्छ कसैले भन्न सक्तैन। ती दाजुभाइ दिदीबहिनीहरुले पनि कहिल्यै यस्तो स्थिति पनि हाम्रो जीवनमा आउला भनेर सोच्नुभएको थिएन होला। तर जीवन हो विभिन्न उतार चढाव, विभिन्न किसिमका दुःख, कष्ट र संघर्ष त आइ नै हाल्छ। तैपनि हामी मानव भएपछि एउटालाई पर्दा अर्कोलाई दुःख्नु, एउटालाई दुःख पर्दा अर्कोलाई सहायता गर्ने मन अथवा भावना पैदा हुनु नै हामी सबैको मानवीय गुण हो। सक्नेले धेरै नसक्नेले थोरै आ-आफ्नो गच्छे अनुसार सबै नेपालीहरुले सरसहयोग गरेर ती दाजुभाइप्रति सहानुभूति देखाएर उहाँहरुको जीवनलाई केही सरल बनाउने प्रयास प्रयत्न पनि विगतका दिनहरुमा भयो जसले हामी सबैलाई एउटा मानवीयताको पाठ सिकाएको छ। एउटा नेपालीलाई पर्दा अर्को नेपालीले सहयोगका हातहरू उठाउने परम्पराले निरन्तरता पाएको छ। ती सम्पूर्ण नेपालीहरु जसले यस वर्षको दशैँलाई दशैँको रुपमा मनाउने सौभाग्य प्राप्त गर्नुभएन उहाँहरुप्रति पनि हामी सहानुभूति राख्दछौँ र उहाँहरुको चाँडैभन्दा चाँडै उत्तरोत्तर प्रगति हुँदै जाओस् र माता महालक्ष्मीको कृपा, आशीर्वाद प्राप्त भएर पुनः पूर्ववत् जीवनमा फर्किने स्थिति बनोस् यही प्रार्थना हामी गर्दछौँ।

दशैँको बिदासँगसँगै दीपावली पनि अब अगाडि आइसकेको छ। दीपावली पर्व आफैमा महत्त्वपूर्ण त छँदैछ। यसले केवल बाहिरी दीप मात्रै नभई हामीभित्रको आत्माको दीप आत्मज्योति बाल्नका लागि, ज्योतिर्मय बन्नका लागि अभिप्रेरित गरिरहेको हुन्छ। ज्योतिर्मय बन्ने सन्देश छोडिरहेको हुन्छ। र यस्तो अवस्थामा जुन देश भर्खरै राजनैतिक उतारचढावबाट एउटा गति लिने अभियानमा जुटेको छ, त्यस्तो अवस्थामा माता महालक्ष्मीको कृपा समग्र देशलाई नै अपरिहार्य हुन जान्छ। आर्थिक क्रान्तिका कुराहरु चलिरहेका बेला, आर्थिक समृद्धिमा देशलाई लैजाने कुरा चलिरहेको बेला समग्र देशले नै, समग्र जनताले नै माता महालक्ष्मीलाई खुशी बनाएर उहाँको कृपा, आशीर्वाद प्राप्त गर्दै देशलाई नै आर्थिक क्रान्तिको दिशातर्फ अग्रसर गराउनु आजको आवश्यकता पनि हो। तर बोलेर मात्र क्रान्ति हुँदैन, कसैले चाहेर मात्र क्रान्ति हुन सक्तैन। मानिसको विचार, भावना र मानिसभित्र रहेको आत्मशक्तिलाई जागृत गरेर सात्विक चिन्तन, सात्विक सोचाइ, सद्विचार, सदाचार राख्दै नैतिकवान् बन्नेतर्फ जबसम्म मानिस स्वयं अग्रसर हुँदैन तबसम्म कुनै पनि क्रान्ति सम्भव हुँदैन। आर्थिक क्रान्ति त गरौँला तर मानिसमा अहिले भएजस्तै मै खाउँ मै लाउँ सुख सयल वा मोज म गरुँ भन्ने भावना भइरहने हो भने त्यो आर्थिक क्रान्तिले पनि देशमा कुनै परिवर्तन ल्याउन सक्तैन किनकि जति अर्थोपार्जन हुन्छ जति कमाइ हुन्छ सबै नै खाँदैमा ठिक्क हुन्छ, देश विकास गरौँ, देशका लागि लगाऔँ, देशको उन्नतिमा आफूले पनि केही योगदान गरौँ, आफूले कमाएको धनलाई देश विकासमा लगाऔँ भन्ने भावना जबसम्म तपाईँ हामीमा हुँदैन तबसम्म सरकारको मुख ताक्नुबाहेक अरु केही हुन सक्तैन। सरकारमा बस्नेहरुले पनि जबसम्म नैतिकवान् र चरित्रवान् भएर राजनीति भनेको जनताको सेवा गर्नु हो, आफ्नो सात पुस्तालाई धन थुपार्नु होइन भन्ने भावनालाई बुझेर जबसम्म राजनीति गर्दैनन् तबसम्म आर्थिक क्रान्तिले पनि हाम्रो जीवनमा कुनै परिवर्तन ल्याउन सक्तैन। क्रान्ति त्यसपछि मात्रै सफल हुन्छ जब व्यक्ति स्वयं नै क्रान्तिका लागि तयार हुन्छ। भन्नुको तात्पर्य जब व्यक्तिमा अनावश्यकरुपमा लोभ, मोह, घमण्ड, अहंकार रहँदैन तब मात्रै उपार्जन गरेको सम्पत्तिको सदुपयोग हुन जान्छ। त्यसैले यस वर्षको दीपावलीमा हामी सबै नेपालीहरु मिलेर माताको भक्तिभाव, पूजा, आराधना गरेर यो देशलाई आर्थिक समृद्धितर्फ लैजानका लागि एकजुट होऔँ। प्रार्थना गरौँ 'हे माता! हामीले धेरै दुःख भोगिसक्यौँ, धेरै संघर्ष भोगिसक्यौँ, अब हामीलाई कृपा गरिदिनुहोस्, हजूर खुशी भइदिनुहोस्, यो देशका जनता, यो देशका नेता, यो देशका समग्र व्यक्ति व्यक्तित्वहरु सदाचारी, नैतिकवान् र सच्चरित्रवान् बनाइदिनुहोस् ताकि उपार्जन गरेको धनको सदुपयोग हुन सकोस्, सही काममा यसको प्रयोग हुन सकोस्'। यही प्रार्थना सँगै सबै नेपालीलाई दीपावलीको हार्दिक मंगलमय शुभकामना अर्पण गर्दै परमपूज्य सद्गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको कृपा आशीर्वादले माता महालक्ष्मीको कृपादृष्टि सबैमा रहिरहोस्, यही शुभकामना। अस्तु।